**मिति : नेपाल संवत् ११४४ सिला २ ।**

माननीय अध्यक्षज्यू,

भाषा आयोग,

यन्ताबुँ, यें (काठमाडौं) ।

**विषय : नेपालको संविधान धारा २८७(६) तथा भाषा आयोग ऐन, २०७४ बमोजिम आदिवासी नेवाः जाति अन्तर्गतका जुगि उप-जातिको आवसीय समस्या बारे भाषिक कोणबाट मागदाबीको सम्बोधन गरिपाऊँ ।**

१. म निवेदक रुक्शना कपाली एक नेपाली नागरिक हुँ । म नेपालमा बसोबास गर्ने विभिन्न जातजाती मध्ये एक आदिवासी जाति **नेवाः जाति**को व्यक्ति हुँ । नेवाः जाति भित्र रहेका विभिन्न जातजाति अर्थात् नेवाः जाति भित्रका उप-जाति मध्ये म **जुगि उप-जाति**को व्यक्ति हुँ । हामी **जुगि उप-जाति**का मानिसहरू ऐतिहासिक विभेदको शिकार भएका उप-जाति हौं । हामीलाई नेवाः समाजमा ***थिञ्ज मग्ग्ुथपिं (थिइ मत्यःपिं)*** अर्थात् शाब्दिक अनुवादमा ***"छुन नहुने[1]"***, अर्थ अनुवादमा ***"अछूत"***, तथा ***क्वजाग (क्वजात)*** अर्थात् शाब्दिक अनुवादमा ***"तल जात"***, अर्थ अनुवादमा ***"तल्लो जात"*** मानिन्छ भने हामी जातिय छुवाछुत तथा भेदभावबाट

---

[1] नेपाल भाषाको "थिञ्ज मग्ग्ुथपिं (थिइ मत्यःपिं)" शब्दमा "थिञ्ज (थिइ)" को अर्थ "छुन" हुन्छ । "मग्ग्ुय (मत्यये)" क्रियापदलाई विशेषणमा रूपान्तरण गरी "मग्ग्ुथ (मत्यः)", र "पिं (पिं)" प्रत्यय भएबाट बहुवचन भन्ने बुझिन्छ । नेपाल भाषाको कतिपय भाषिकाहरूमा "पिं (पिं)" नभएर "पुं (पुं)" पनि भनिन्छ । "ग्ग्ुय (त्यये)" अर्थात् "हुनु" र त्यसको अकरण "मग्ग्ुय (मत्यये)" अर्थात् "नहुनु" क्रियापदको नेपाल भाषामा विशेष अर्थ छ । सामान्यतः "हुनु" लाई "जिय (जिये)" र "नहुनु" लाई "मजिय (मजिये)" भनिने गरिन्छ । तर ग्ग्ुय (त्यये)" / "मग्ग्ुय (मत्यये)" क्रियापदले सांस्कृतिक वा धार्मिक रूपमा गर्न हुने वा नहुने, गरेमा वा नगरेमा पाप लाग्ने वा धार्मिक कार्यको मकसद पूर्ती हुने वा नहुने विषयसँग जोड्दछ ।

रुक्शना

उत्पीडित उप-जाति पनि हौं । **नेवाः जाति**को थातथलो **नेपाल मन्दल** एवं यसको केन्द्रमा रहेको **नेपाः (नेपाल) उपत्यका**मा लिच्छवीकालीन मल्लकालीन समय देखि हामी जुगि जातिका मानिसहरू **सतःछेँ (सत्तलघर)** निर्माण गरी त्यसमा बसोबास गर्दै आइरहेका छौं । भारतीय उपमहाद्वीपमा हिन्दू धर्मको शैव सम्प्रदाय अन्तर्गत **नाथ सम्प्रदाय**मा उदय भएको **योग अभ्यास** अवलम्बन गर्ने **योगी** वा **जोगी** समुदाय ऐतिहासिक कालखण्डमा वर्तमान नेपालका विभिन्न क्षेत्रमा प्रवेश गरेका थिए । यी **योगी जोगी**हरू **खस-आर्य समुदाय**मा प्रवेश गरे, **दशनामी सन्यासी समुदाय**को उत्पत्ति भयो । यिनै **योगी जोगी** तिब्बतमा प्रवेश गरे **गेलुक्पा सम्प्रदाय**को उत्पत्ति भयो । त्यसरी नै यिनै **योगी जोगी**हरू नेपाल मन्दल प्रवेश गरे **नेवाः समुदाय**को **जुगि समुदाय** उत्पत्ति भयो । यी **योगी जोगी**हरू सांसारिक जीवनबाट ताढा रहन पर्ने जीवनशैली अपनाएकाले भारतीय उपमहाद्वीपमा **धर्मशाला** निर्माण गरी बसोबास गर्दथे । नेपाल मन्दलमा प्रवेश भइसकेपछी जुगि जातिका पुर्खाहरूले **धर्मशाला** जस्तै **फलचा (पाटी), सतः (सत्तल), मन्दः (मण्डप), चपाः (चपात)** जस्ता संरचनाहरू निर्माण गरी बसोबास गर्न थाले । पछी गृहस्थ जीवनशैलीमा परिणत भइसकेपछी यस्तै प्रकृतिका संरचनामा स्थायी बसोबास हुन थाले । तर वर्तमान परिपेक्ष्यमा यस्ता **सतःछेँ (सत्तल घर)** लाई राज्यले **पाटीपौवा**को रूपमा गणना गरी हाम्रो वासस्थानलाई सार्वजनिक सम्पत्तिको दायरामा ल्याउने कार्य भइरहेको छ । यसरी हाम्रो बसोबासको संरचनालाई सार्वजनिक सम्पत्तिको दायरामा ल्याउँदा फलतः हामीहरू ***"सरकारी, सार्वजनिक सम्पत्तिमा बसेको"***, यहाँसम्म कि ***"सरकारी, सार्वजनिक सम्पत्ति अतिक्रमण गरेर, मिचेर बसेको"*** जस्ता लाञ्छनाको शिकार भई घरबारविहीन एवं सुकुमबासी कतिपय ठाउँमा भएको एवं कतिपय ठाउँमा हुने संहारमा छौं । नेपाल सरकार तथा साविकको श्री ५ को सरकार यस नेपाल मन्दलमा हामी पछि आएका हुन् । लिच्छवीकाल मल्लकाल देखि निरन्तर बसोबास गर्दै आएको संरचनालाई हामीले हामी भन्दा पछी आएको राज्य व्यवस्थाबाट अतिक्रमण गर्न सक्ने अवस्था हुनै सक्दैन । नेपाल सरकार तथा साविकको श्री ५ को सरकारले **सतःछेँ (सत्तलघर)** लाई पाटीपौवाका रूपमा दर्ता गर्ने एवं यस्ता संरचनाहरूलाई सार्वजनिक सम्पत्तिको दायरामा सम्मेलित गरी सरकारको स्वामित्व कायम गर्ने निर्णय गर्दा हाम्रो समुदायको संलग्नता तथा सहभागिता एवं हाम्रो समुदायको इच्छा चाहना, सरोकार, हकहित अधिकार एवं छनोटलाई सम्बोधन गरेको कहीकतैबाट देखिँदैन । कुनै वैकल्पिक व्यवस्थाको परिकल्पना समेत नगरी राज्यले हाम्रो परापूर्वकाल देखिको बासस्थानलाई

सार्वजनिक सम्पत्तिको दायरामा ल्याई हामीलाई त्यसबाट अधिकारच्यूत तथा हकशून्यताको अवस्थामा पुर्याइदिएको छ ।

नेवाः जाति अन्तर्गतका जुगि उप-जातिको यो आवसीय समस्यालाई विभिन्न कोण दृष्टिकोणले व्याख्या विश्लेषण गर्न सकिन्छ । त्यही क्रममा यस विषयवस्तुमा रहेको भाषिक अधिकारको कोणबाट व्याख्या विश्लेषण गरी यो सामुदायिक सरोकारको निवेदन लिई यस आयोगको शरणमा आएका छौं ।

यस निवेदनमा उठान गरिएका समस्याहरूलाई भाषा, भाषिक हिंसा तथा भाषिक अधिकारका रोहमा विश्लेषण गरी नेपालको संविधान धारा २८७(६) तथा भाषा आयोग ऐन, २०७४ द्वारा प्रदत्त अधिकार प्रयोग गरी आवश्यक कार्यबाट निकाशा दिलाइपाऊँ ।

## (अ) पृष्ठभूमी ।

यस विषयवस्तुको भाषिक कोण के हो भन्ने जिकिर गर्न अगावै यसको पृष्ठभूमीको बारेमा अवगत गराउन मनासिब हुन्छ ।

२. **नेवाः जातिको परिचय :** ने.सं. ११४२ (२०७८) सालको राष्ट्रिय जनगणनाका अनुसार नेपालमा १४२ जातजातिका मानिसहरूको बसोबास छ । नेपालका यिनै सय भन्दा बढी जातजातिमा **नेवाः जाति** पनि रहेको छ । यो जाति नेपालको एक आदिवासी जाति हो । **आदिवासी/जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन, ने.सं. ११२१ (२०५८)** को अनुसूची बुँदा २७ मा यस जातिलाई **"नेवार"** भनि सूचिकृत गरिएको छ ।

(क) यस जातिले आफूलाई **"नवाः (नेवाः)"** भनि चिनाउने गरेको छ । **"नवाः (नेवाः)"** शब्द यस जातिको **आत्मनाम (Endonym)** हो । **"आत्मनाम"** भन्नाले **"आफ्नो नाम"** हो । कुनै समुदाय, भाषा तथा स्थानलाई सोही समुदायका मानिसहरूले चिन्ने नामलाई **आत्मनाम** भनिन्छ ।[२]

[2] endonym, n.: "A name for something, esp. a place, a group of people, or a language, that is used internally in that place, or by that people or language community…", Oxford English Dictionary, https://public.oed.com/updates/new-

**"नवा8 (नेवाः)"** शब्दको मूल शब्द **"नवाल (नेवाल)"** हो ।[३] नेपाल भाषामा "ल (ल)" व्यञ्जन ध्वनि "ञ् (अ)" स्वर ध्वनिमा परिवर्तन भई अगाडीको स्वर ध्वनिसँग सन्धी हुने भाषावैज्ञानिक प्रक्रिया छ । यसरी "ञ् (अ)" स्वर ध्वनिमा परिवर्तन भएपछी शब्दमा त्यस परिवर्तित ध्वनिको अगाडीको स्वर ध्वनि "ञ् (अ)" भएमा सन्धी भई "ञ्8 (अः)" तथा अगाडीको स्वर "ञा (आ)" भएमा सन्धी भई "ञा8 (आः)" दीर्घ स्वर वर्णको उत्पत्ति हुने गर्दछ ।[४]

खस / पर्वते भाषा (नेपाली भाषामा) विसर्ग चिन्ह (ःः) ले "ह" व्यञ्जन स्वरलाई जनाउँछ । जस्तैः- "अतः" भन्नाले "अतह्" हो ।[५] तर नेपाल भाषामा लिफुगि (लिफुति), अर्थात् विसर्ग चिन्ह, ले दीर्घ स्वर वर्ण जनाउँछ । यसार्थ नेपाल भाषामा "ञ् (अ)" को दीर्घ "ञ्8 (अः)" तथा "ञा (आ)" को दीर्घ "ञा8 (आः)" हुन्छ ।

यसरी विभिन्न शब्दहरूमा "ल (ल)" वर्णको ध्वनि परिवर्तनले "ञ्8 (अः)" र "ञा8 (आः)" युक्त ध्वनि उत्पन्न हुँदछ ।[६]

उदाहरणका लागि :-

- यसल – यस8 (पसल — पसः) अर्थात् पसल,
- ङ्याल – ङ्या8 (झ्याल — झ्याः) अर्थात् झ्याल,
- खाल – खा8 (खाल — खाः) अर्थात् शीशा,
- गाल – गा8 (गाल — गाः) अर्थात् खाल्डो,
- घाल – घा8 (घाल — घाः) अर्थात् घाउ, इत्यादी ।

यही ध्वनि परिवर्तनको प्रक्रियामा **"नवाल (नेवाल)"** मूल शब्दबाट **"नवा8 (नेवाः)"** शब्द बनेको हो ।

words-list-march-2021/.

[3] *नेपाल र नेवाल मूलतः ऋग्वैदिक शब्द*, शिवराज शर्मा, वि.सं. २०५४ ।

[4] *नपालतासा छस8ग्याना ताय् (नेपालभासा छ्सःज्याना भाय्)*, विष्णु चित्रकार, नेवाः सिक्षा गुथि, ने.सं. ११३७ ।

[5] *A Grammar of Contemporary Nepali*, बलराम अधिकारी, नेपाल प्रज्ञा प्रतिष्ठान, सन् २०१६ ।

[6] ऐ.ऐ. (५) ।

(ख) कानूनी दस्तावेजमा यस जातिलाई **"नेवार"** भनि सम्बोधन गरिएतापनि **"नेवार"** शब्द एक **परनाम (Exonym)** हो । **"परनाम"** भन्नाले **"अरूले दिएको नाम"** हो । कुनै समुदाय, भाषा तथा स्थानलाई अन्य समुदायका मानिसहरूले चिन्ने नामलाई **परनाम** भनिन्छ ।[७]

खस-आर्य समुदायबाट यस जातिले **नेवार** नाम पाएको हो । नेपाल भाषामा अरू भाषाबाट "न (र)" वर्ण भएका शब्दहरू प्रवेश हुँदा "ल (ल)" मा परिवर्तन हुन्छ । जस्तैः-

- संस्कृत "नाह्नी (राज्ञी)" - नेपाल भाषामा "लानि (लानि)",
- संस्कृत "नाक्ष्स (राक्षस)" - नेपाल भाषामा "लाखस (लाखस)" हुँदै "लाखय् (लाखय्)",
- संस्कृत "नाजकुल (राजकुल)" - नेपाल भाषामा "लाजकुल (लाजकुल)" हुँदै "लाय् कू (लाय्कू)", इत्यादी ।[८]

पहिले नेपाल भाषामा "न (र)" वर्ण थिएन । यो पछी विकास भएको वर्ण भएकाले यसलाई neophone पनि भनिन्छ । नेपाल भाषाका "ग, थ, द (त, थ, द)" जस्ता वर्णहरू ध्वनि परिवर्तन (अपभ्रंश) भई "न (र)" वर्णको विकास भएको पाइन्छ ।[९] जस्तैः-

- "सगवग (सतबत)" बाट "सनवग (सरबत)" अर्थात् चुल्थी,
- "ज्ञ्थ (अथे)" बाट "ज्ञ्न (अरे)" अर्थात् त्यस्तो,
- "दँ (दँ)" बाट "नँ (रँ)" अर्थात् वर्ष, इत्यादी ।[१०]

त्यसैले तत्कालीन समयमा नेपाल भाषामा "न (र)" विहीनता एवं "ल (ल)" प्रधानताको अवस्था देखिन्छ ।

---

[7] exonym, n.: "A name for something, esp. a place, a group of people, or a language, that is only used outside of that place, group, or language community; such as…" , Oxford English Dictionary, https://public.oed.com/updates/new-words-list-march-2021/.

[8] ऐ.ऐ. (५) ।

[9] ऐ.ऐ. (५) ।

[10] ऐ.ऐ. (५) ।

खस / पर्वते भाषा (नेपाली भाषा) मा थुप्रै नेपाल भाषाका आगन्तुक शब्दहरू छन् जसमा "ल-र परस्परता" देखिन्छ ।

जस्तै :-

- नेपाल भाषाको मूलरूपमा "**तकसाल** (तकसाल)" तथा समसामायिक रूपमा "**तकसाः** (तकसाः)" भन्ने शब्द खस / पर्वते भाषा (नेपाली भाषा) मा आगमन हुँदा "टक्सार" भएको छ ।
- नेपाल भाषाको मूलरूपमा "**पलखाल** (पलखाल)" तथा समसामायिक रूपमा "**पःखाः** (पःखाः)" भन्ने शब्द खस / पर्वते भाषा (नेपाली भाषा) मा आगमन हुँदा "पर्खाल" भएको छ ।

यसरी नेपाल भाषाको **"नवाल (नेवाल)"** शब्द खस / पर्वते भाषा (नेपाली भाषा) मा प्रवेश हुँदा **"नेवार"** भएको भाषावैज्ञानिक आधारले बुझ्न सकिन्छ ।[११]

(ग) त्यसै गरी यस जातिलाई तामाङ भाषामा "**བ་ཨི་ (बाइ)**"[१२], तिब्बती भाषामा "**བལ་པོ་ (फेल्पो)**"[१३], आठपहरिया भाषामा "**साकि उलुवाट्**" वा "**सिम्कालेम्**"[१४], दुमी भाषामा "**गुजीक्पा**"[१५], खालिङ भाषामा "**जक्पा**"[१६], स्युबा भाषामा "**पाःल्बु**"[१७], याक्खा भाषामा "**खिक्चोक्पा**"[१८], इत्यादि विभिन्न परनामहरू छन् ।

(घ) ने.सं. ११९६ (सन् १९९६) को **भाषिक अधिकार सम्बन्धी विश्वव्यापी सम्मेलन**द्वारा अनुमोदन गरिएको **भाषिक अधिकारको विश्वव्यापी घोषणापत्र**को धारा ३३ ले कुनै

---

[11] *नेपालभाषा लेखन सहयोगी*, रुक्शना कपाली, ने.सं. ११४१ ।

[12] *ཕྲ་གྱ་ ཏ་མང་ - རྫར་དི་ - ཨང་གྲེ་ཇི་ གྱོ་ཨི་ལ་ ཚིག་དེབ་ (प्रग्या तामाङ-ज्यार्दी-आङग्रेजी ग्योईला छीगदेब)*, नेपाल प्रज्ञा प्रतिष्ठान, वि.सं. २०७४ ।

[13] ऐ.ऐ. (१०) ।

[14] आठपहरिया-नेपाली-अङ्ग्रेजी शब्दकोश, SIL Nepal, https://www.webonary.org/athpahariya/ ।

[15] दुमी-नेपाली-अङ्ग्रेजी शब्दकोश, SIL Nepal, https://www.webonary.org/dumi/ ।

[16] खालिङ-नेपाली-अङ्ग्रेजी शब्दकोश, SIL Nepal, https://www.webonary.org/khaling/ ।

[17] स्युबा-नेपाली-अङ्ग्रेजी शब्दकोश, SIL Nepal, https://www.webonary.org/syuba/ ।

[18] याक्खा-नेपाली-अङ्ग्रेजी शब्दकोश, SIL Nepal, https://www.webonary.org/yakkha/ ।

समुदाय वा जातिका लागि सो समुदायले आफूलाई पहिचान गर्ने नामबाट चिनिन पाउनुपर्छ भन्ने मान्यतालाई प्रतिपादन गरेको छ ।[१९]

***Article 33: All language communities have the right to refer to themselves by the name used in their own language. Any translation into other languages must avoid ambiguous or pejorative denominations.***

(ङ) नेवाः जातिको उत्पत्ति भूमीलाई **नपाल मन्नल ( नपाः मन्नः) / नेपाल मन्दल (नेपाः मन्दः)** वा **नपाल मण्डल / नेपाल मण्डल** भन्ने गरिएको छ । यो एउटा ऐतिहासिक तथा सांस्कृतिक भूखण्ड हो, जुन हालको बागमती प्रदेशको मध्यमा अवस्थित छ । **नेपाल मन्दल**को सीमा इतिहासका विभिन्न कालखण्डमा केही परिवर्तन परिमार्जन हुँदै गरेको देखिन्छ । तथापि ऐतिहासिक **नेवाः थातथलो**लाई **नेपाल मन्दल** भनिएको भन्ने बुझ्न सकिन्छ ।[२०] यसलाई **नेवाः राज्य** पनि भन्ने गरेको पाइन्छ ।

(च) **नेपाल मन्दल**को पनि केन्द्रका रूपमा **नेपाल उपत्यका (नेपाः उपत्यका)** रहेको पाइन्छ । यसलाई अहिले **काठमाडौं उपत्यका** पनि भन्न थालिएको छ । तथापि हामी रैथानेहरू यसलाई **अपनामांकन (misnomer)** का रूपमा लिन्छौं । उपत्यकामा भएका तीन प्रमुख राज्य मध्ये एक राज्यबाट पूरै उपत्यकाको नाम कहिल्यै रहेको थिएन । नेपाल भाषामा नेपाः उपत्यकालाई "**नपाः गाः (नेपाः गाः)**", मूलरूपः "**नपाल गाल (नेपाल गाल)**", भनिन्छ । यो प्रचलन अझै निरन्तर कायम नै छ । केही दशक अगाडी मात्र र अहिले पनि ज्येष्ठ नागरिकहरूमा "काठमाडौं उपत्यका जाने"लाई "**नेपाल जाने**" भन्ने प्रचलन देखिन्छ । तसर्थ **नेपाः उपत्यकालाई काठमाडौं उपत्यका** भन्नु ऐतिहासिक तथा सांस्कृतिक दृष्टिकोणले अनुचित छ । **यँ (यें)** अर्थात् कान्तिपुर, **यल (यल)** अर्थात् ललितपुर तथा **ख्वप (ख्वप)** अर्थात् भक्तपुर तीन शहरलाई नेपाल भाषामा "**स्वनिगः (स्वनिगः)**" पनि भनिन्छ ।[२१]

---

[19] *Universal Declaration of Linguistic Rights 1996*, World Conference on Linguistic Rights, https://unesdoc.unesco.org/ark:/48223/pf0000104267.

[20] *नेपालमण्डल*, काशीनाथ तमोट, नेपालमण्डल अनुसन्धान गुथि, ने.सं. ११२६ ।

[21] Online Nepalbhasa Dictionary, https://www.nepalbhasa.org/ ।

(छ) यस नेपाल मन्दलमा सर्वप्रथमतः आफ्नो राष्ट्रियता स्थापित गरेको हुनाले नेवाः जातिलाई नेपाल मन्दलको **प्रथम राष्ट्र (First Nation)** पनि भनिन्छ ।

(ज) नेपाल मन्दलमा बोलिने भाषा भएकाले यस जातिको मातृभाषालाई "**नेपाल भाषा**" भनिन्छ । नेपाल भाषामै नेपाल भाषालाई मूलरूपमा **नपाल तास (नेपाल भास)** वा समसामायिक रूपमा **नपा8 ताय् (नेपाः भाय्)** भनिन्छ । त्यसै गरी मूलरूपमा **नवाल तास (नेवाल भास)** वा समसामायिक रूपमा **नवा8 ताय् (नेवाः भाय्)** पनि भन्ने गरिन्छ ।[२२] देशको नाममा भाषाको नाम **नेपाल भाषा** रहन गएको हो भने जनताको नाममा भाषाको नाम **नेवाल भाषा** रहन गएको हो । ने.सं. ११११५ (२०५२) सालमा मन्त्रीपरिषद्को बैठकले श्री ५ को सरकार मन्त्रिपरिषद् सचिवालयको पत्र संख्या ३५६/०५२ मार्फत् यस भाषालाई "**नेपाल भाषा**" भनि सम्बोधन गर्नुपर्ने निर्णय गरेका थिए ।[२३]

(झ) त्रिभुवन विश्वविद्यालयमा **नेपाल भाषा**को प्राज्ञिक संस्थानका रूपमा **नेपाल भाषा केन्द्रिय विभाग**, यल ध्वाखा (पाटन ढोका), पाटन बहुमुखी क्याम्पसको परिसर भित्र रहि **नेपाल भाषा**को विद्यावारिधि तह सम्म अध्ययन अध्यापन हुँदै आएको छ ।

(ञ) भाषा आयोगको सिफारिस अनुसार **नेपाल भाषा**लाई बागमती प्रदेशमा सरकारी कामकाजको भाषा बनाउन एवं प्रदेश नं १ तथा गण्डकी प्रदेशमा सीमित क्षेत्र तथा प्रयोजनका लागि कामकाजी बनाउन सिफारिस भएको छ ।[२४]

(ट) बागमती प्रदेशले **प्रदेश सरकारी कामकाजको भाषा ऐन, ने.सं. ११४३ (२०८०)** जारी गरी नेपाल भाषालाई सरकारी कामकाजको भाषा बनाएको छ ।

(ठ) त्यसै गरी यल (ललितपुर) महानगरपालिका, यें (काठमाडौं) महानगरपालिका, किपू (कीर्तिपुर) नगरपालिका लगायत नेपाः उपत्यकाका विभिन्न स्थानीय सरकारहरूले पनि नेपाल भाषालाई विभिन्न रूपमा प्रयोग प्रचलनमा ल्याएका छन् ।

---

22 *नपाल खँव8या ब्यूत्पत्ति (नेपाल खँग्वःया व्युत्पत्ति)*, डा. कमल प्रकाश मल्ल, नेपालभाषा पत्रिका, ने.सं. ११०० ।

23 वि.सं. २०५२/५/२२ गते श्री ५ को सरकार मन्त्रिपरिषद् सचिवालयको पत्र संख्या ३५६/०५२ रहेको पत्र ।

24 *सरकारी कामकाजको भाषासम्बन्धी सिफारिसहरू*, वि.सं. २०७८, भाषा आयोग ।

(ड) नेपाल भाषा बहुलिपिमा आधारित भाषा हो । नेपाल भाषाको प्रमुख लिपिलाई **नपाल लिपि (नेपाल लिपि)** भनिन्छ ।[२५] त्यस बाहेक **नङ्ना (रञ्जना)** लिपि, **गुजिंम्व8 (भुजिंम्वः)** लिपि, **पाचुम्व8 (पाचुम्वः)** लिपि, **हिंम्व8 (हिंम्वः)** लिपि, **क्वँयूम्व8 (क्वँयूम्वः)** लिपि, **कुंम्व8 (कुंम्वः)** लिपि, **लिगुम्व8 (लितुम्वः)** लिपि तथा **ग्वलम्व8 (ग्वलम्वः)** लिपि गरी ९ वटा मौलिक लिपि प्रचलनमा रहेको पाइन्छ ।[२६] ती मध्ये नेपाल लिपिलाई मूल लिपि मानिएको हुनाले सोही लिपिलाई प्रयोगमा विस्तार गरिएको देखिन्छ ।

(ढ) नेवाः जातिले प्रयोग प्रचलन गर्दै आएको संवत् **नेपाल संवत्** हो । हाल नेपाल संवत् ११४४ साल चलिरहेको छ ।

(ण) ने.सं. ११२७ सालमा नेपाल संवत्लाई नेपाल सरकारले राष्ट्रिय संवत्को मान्यता दिएको थियो ।[२७] यसै साल (ने.सं. ११४४) देखि सरकारी कागजातहरूमा **विक्रम संवत् सँगसँगै नेपाल संवत् पनि उल्लेख गर्ने** मन्त्रीपरिषद्ले निर्णय गरेको छ ।[२८]

(त) बागमती प्रदेशले जारी गरेको **प्रदेश सरकारी कामकाजको भाषा ऐन, ने.सं. ११४३ (२०८०)** को दफा ५ (२) ले **सरकारी कागजमा नेपाल संवत् समेत उल्लेख गर्न सक्ने** व्यवस्था गरेको छ ।

(थ) ने.सं. ११४० देखि ललितपुर महानगरपालिकाले न्याय सम्पादनका कार्यहरू बाहेक **सम्पूर्ण कार्यहरू सम्पादन गर्दा साथै पत्राचार गर्दा विक्रम संवत् साथै नेपाल संवत् पनि अनिवार्य रूपमा लेख्नुपर्ने** निर्णय निर्देशन गरेको थियो ।[२९]

---

[25] *नपाल लिपि (नेपाल लिपि)*, नेपाल लिपि गुथि, नेसं ११३७ ।

[26] *नपाल लिपि संग्रह (नेपाल लिपि संग्रह)*, हेमराज शाक्यवंश, ने.सं. १११३ ।

[27] गोरखापत्र, वि.सं. २०६५ कार्तिक ९, पृ. १ ।

[28] २०८० कार्तिक २७ गते मन्त्रीपरिषद् बैठकको निर्णय ।

[29] महानगरको मिति २०७७/०४/०२ को च.नं. २७ को पत्र ।

(द) ने.सं. ११४४ देखि मध्यपुर थिमि नगरपालिका वडा नं ८ कार्यालय, ब्वदेय् (बोडे) ले पनि वडा **कार्यालयको लेटरप्याड, कार्यालयबाट हुने सिफारिस लगायत आधिकारिक पत्राचारहरूमा नेपाल संवत्को तिथिमिति प्रयोग गर्ने** वडा स्तरीय निर्णय गरेको छ ।[३०]

(ध) नेपाल संवत् अमावशान्त चन्द्रमानक पात्रो हो । तीन शहरहरूमा तीन निकायहरूले तिथि निर्धारण गर्ने गर्दछन् । **यें देय्** (काठमाडौं देश) मा **जनबहा:**ले तिथि निर्धारण गर्दछ । **यल देय्** (ललितपुर देश) मा **क्वा:बहा:**ले तिथि निर्धारण गर्दछ । **ख्वप देय्** (भक्तपुर देश) मा **तल्जु (तलेजु)** ले तिथि निर्धारण गर्दछ ।

(न) त्यसै गरी दैनिक कामकाज, संस्थागत कामकाज लगायत सरकारी कामकाजको प्रयोग प्रचलन समेत गर्ने उद्देश्यका साथ नेपाल संवत् ११४१ देखि हामी अभियानताहरूले नेपाल संवत् सुरु भएको ऐतिहासिक दिनलाई वर्षादि मानी सौर्यमानक पात्रो अर्थात् मिति / गते प्रणाली पनि सुरु गरेका छौं ।[३१]

३. **<u>नेवा: जाति भित्रका जातजाति</u>** : नेपालमा रहेका विभिन्न जातजातिहरू मध्ये नेवा: जातिको संघटन केही पृथक रहेको पाइन्छ । नेवा: जाति कुनै एकास्वरूपको homogenous समूह होइन । नेवा: एक बहुलतामा आधारित जाति हो ।

मल्लकालीन समय सम्म नेवा: जनसंख्याको आफ्नै छुट्टै देश थियो । त्यसलाई **नेपाल मन्दल** भनिन्थ्यो । **नेवा: राज्य** पनि भन्ने गरेको पाइन्छ । **नेपाल मन्दलमा** थुप्रै राज्य तथा उप-राज्य थिए ।

नेपाल उपत्यकाको विभिन्न कालखण्ड हेर्दा **सायू (सापू)** अर्थात् गोपाल कालखण्ड, **म्ग्यपू (म्येय्पू)** अर्थात् महिषपाल कालखण्ड, **किलाँगि (किलाँति)** अर्थात् किराती कालखण्ड, **दवजुजु (देबजुजु)** अर्थात् लिच्छवी कालखण्ड एवं **थकूंजुजु (थकुंजुजु)** अर्थात् मल्ल कालखण्ड सम्म

30 वडा कार्यालयको मिति २०८०/०७/२४ को पत्र तथा निर्णय ।

31 नेपाल संवत् पात्रो https://calendar.brihatrb.com.np/, http://nepalsambat.org/ ।
मिति परिवर्तन उपकरण https://brihatrb.com.np/solarnsconverter/solarnsconverter.html, https://www.subhash.com.np/nepalsambat/converter ।

विभिन्न स्थानहरूबाट नेपाल मन्दल आएर बसोबास गरेका समुदायहरू एउटा संयुक्त आबद्धतामा गठन भए । **ग्वनखां ग्य8व8ग्ु (ग्वरखां त्यःवःगु)**, शाब्दिक अर्थमा **गोरखाले ठेल्न आएको**, भावानुवादमा गोरखा राज्यले नेपाल मन्दललाई आफ्नो अधीनमा लिए पछी, यो सिलसिलाको अन्त्य भएको मानिन्छ ।

इतिहासको विभिन्न कालखण्डमा विभिन्न स्थानहरूबाट विभिन्न पृष्ठभूमीका मानिसहरू **नेपाल मन्दल** आए । कालान्तरमा उनीहरू अन्तरघुलन भए । यही विविध पृष्ठभूमीको **अन्तरघुलनमा एक संयुक्त समाज**को निर्माण भयो । त्यही समाज **नेवाः समाज** हो ।[३२]

**(क)** नेवाः जाति भित्रका उप-जातिहरूलाई देहायका रूपमा सूचिकृत गर्न सकिन्छ ।[३३]

१. उनाय् (उराय्) ।
२. कुह्मा8 (कुम्हाः) ।
३. कुल् (कुलु) ।
४. कौ (कौ) ।
५. खुस8 (खुसः) ।
६. गथ् (गथु) ।
७. गुताज् (गुभाजु) ।
८. ग्वा8 (ग्वाः) ।
९. च्यामिखल8 (च्यामिखलः) ।
१०. छिया (छिपा) ।
११. जुगि (जुगि) ।
१२. ग्याप् (ज्यापु) ।
१३. गप (तेपे) ।
१४. दुँइ (दुँइ) ।
१५. द्वं (द्वं) ।

---

32 *The Newars of Nepal*, Gopal Singh Nepali, 1959.
33 *The Newars of Nepal*, Gopal Singh Nepali, 1959, Page 257.

१६. ध्वञ्ग्या (ध्वब्या) ।

१७. नाय् (नाय्) ।

१८. नौ (नौ) ।

१९. पही / पहलि (पही / पहलि) ।

२०. पुं (पुं) ।

२१. पुलु (पुलु) ।

२२. प्वः (प्वः) ।

२३. बःमुं (बःमुं) ।

२४. बरेजु (बरेजु) ।

२५. वलामि (बलामि) ।

२६. भाः (भाः) ।

२७. मधिकःमि (मधिकःमि) ।

२८. मुस्मां (मुस्मां) ।

२९. ल्वहंकःमि (ल्वहंकःमि) ।

३०. साय्मि (साय्मि) ।

३१. सिँकःमि (सिँकःमि) ।

३२. स्यस्यः (स्यस्यः) ।

३३. हालाहुलु (हालाहुलु) ।

**(ख)** कतिपय ग्रन्थपुस्तक लेख्यसामाग्रीहरूको अध्ययन गर्दा नेवाः जाति भित्र **६४ उप-जाति**को अस्तित्व रहेको भन्ने पनि उल्लेख गरिएको पाइयो । यद्यपि ती **६४ उप-जाति**को सूचिकरण भने पाइएन ।

**(ग)** नेपाल संवत् ११३७ देखि नेपाल संवत् ११४१ (तदनुसार सन् २०१७ देखि २०२१) सम्म विजु कर्माचार्यद्वारा सामाजिक सञ्जाल फेसबुकमा गरिएको एक सर्वेक्षण अनुसार नेवाः जातिमा **१०४८ (एक हजार अड्चालीस) थर**हरू सूचिकरण गरेका छन्

।[३४] यसबाट नेवाः जातिको समग्रतामा थरहरूको सूची प्राप्त भएको छ, यद्यपि उप-जातिको वर्गिकरण अनुसार थर सूचिकृत छैन ।

**(घ)** नेपाल सरकार वा कुनै तहको सरकारी निकायबाट हालसम्म आधिकारिक रूपमा नेवाः जाति भित्रका उप-जातिको सूचाङ्कन भएको अवस्था छैन । उपलब्ध ग्रन्थपुस्तक साहित्यमा उपलब्ध सूचीमा एकरूपता छैन ।

४. **नेवाः जातिमा जात (caste) व्यवस्था** : नेवाः जाति भित्र पनि जातिय विविधता त छँदैछ, यसका साथै जात व्यवस्था तथा जातिय विभेद पनि विद्यमान छ ।

**(क)** लिच्छवीकालीन समयमा नै नेपालमा वर्ण व्यवस्थाले प्रवेश पाइसकेको भन्ने उल्लेख भएको पाइन्छ । लिच्छवीकालमा ४ जात तथा २८ वर्ण व्यवस्था रहेको पनि भनिएको छ ।[३५]

**(ख)** त्यसै गरी मल्लकालमा जारी भएको **मानवन्यायशास्त्र**बाट पनि जात व्यवस्थाले समाज तथा राज्य दुबैमा स्थान पाएको देखिन्छ । यसमा **श्रेष्ठका जात ३६, तागाधारी जात १३, ज्यापुको जात ३२, कुमालको जात ६४, कसाही नङ काट्ने जात ७२, वाडाको जात ६, कुसलेको जात ४, पोडेको जात** ४ लगायत जम्मा गरी **७२५ जात** बनाएको भन्ने उल्लेख छ ।[३६]

**(ग)** **मुलुकी ऐन १९१०** को राणाकालीन कानूनले नेपाललाई नै जात व्यवस्थामा वर्गिकरण गरेको थियो । उक्त ऐनको जातिय वर्गिकरण अनुसार नेवाः जातिका जातजातिलाई निम्नानुसार जात व्यवस्थामा वर्गिकरण गरिएको पाइन्छ ।

---

[34] *नेवाः थर*, विजु कर्माचार्य, https://www.facebook.com/People.cadres/posts/pfbid02c25zt6hFZWVpYVV5na4mLbTLc6633u8i5raqEED6z2DQu36QMZrH6JTzHAEAWArrl ।

[35] *जयस्थिति मल्लको सुधार*, चन्द्रविक्रम बुढाथोकी, साझा प्रकाशन, वि.सं. २०३९ ।

[36] *जयस्थिति मल्लको सुधार*, चन्द्रविक्रम बुढाथोकी, साझा प्रकाशन, वि.सं. २०३९, पृ. ६ ।

*तागाधारी : राजोपध्याय (देवभाजु), उच्च श्रेष्ठ समूह र जोशी नेवार ।*

(हाम्रो चलनचल्तीको भाषामा यिनलाई **बर्मुं** तथा **स्यस्यः** भनिन्छ।)

*पानी नचल्ने छोइछिटो हाल्न नपर्ने : खड्गी, कपाली, रजक, चर्मकार, मुस्लिम, कुलु ।*

(हाम्रो चलनचल्तीको भाषामा यिनलाई क्रमशः **नाय्, जुगि, ध्वब्या, द्धं, मुस्मां** तथा **कुलु** भनिन्छ।)

*पानी नचल्ने छोइछिटो हाल्न पर्ने : च्यामे, पोडे ।*

(हाम्रो चलनचल्तीको भाषामा यिनलाई **प्वः** तथा **च्यामिखलः** भनिन्छ।)

**(घ)** नेवाः समाजमा जात व्यवस्था तथा वर्गिकरण सर्वप्रथमतः जयस्थिति मल्लले **नेपाल संवत् ५००** सालमा नारदस्मृतिलाई नेपाल भाषामा उतार गरी लागू गरेको **थिति**बाट सुरुवात भएको बुझिन्छ । त्यसै गरी **नेपाल मन्दल**का राज्यहरू गोरखा राज्यको अधीनमा परिसकेपछी शाह वंशीय राजतन्त्रबाट अनुमोदन भएको जात व्यवस्था एवं **मुलुकी ऐन, १९१०** द्वारा राणा शासकहरूले लागू गरेको जात व्यवस्था, यी विभिन्न कालखण्डको परिमार्जनले नेवाः समाजको जात व्यवस्थालाई जटिल तथा फरक स्वरूपको बनाएको देखिन्छ ।

(ङ) Ulrike Müller-Böker को **Spatial Organization of a Caste Society: The Example of the Newar in the Kathmandu Valley, Nepal** मा नेवाः समाजको जात व्यवस्थाको सोपान (hierarchy) लाई यसरी दर्शाइएको छ । (तालिका २, पाना २६)

TABLE 2
*Newar castes*

| | |
|---|---|
| Barmu/Brahmin[1] | Temple and family priests |
| Gubhaju/Bajracaraya[2] | Priests, gold and silversmiths |
| Bare/Shakya[2] | Temple priests, metal casters |
| Syasyah/Shrestha[1] | Trade and businessmen |
| 1. Chathari | (e.g., Acaju-tantric priests, Amatya-ministers) |
| 2. Pacthari | (e.g., Josi–astrologists, Malla-businessmen) |
| 3. Tini | |
| Uray/Udas | Tradesmen, coppersmiths |
| Jyapu | Farmers |
| Kumah/Kumale | Potters |
| Gathu/Mali | Farmers, gardeners |
| Rajthal | Farmers, producers of brewer's yeast and rice flakes |
| Chipa/Ranjitkar | Dyers |
| Saymi/Manandhar | Oil pressers |
| Pu/Citrakar | Painters |
| Kau/Nakarmi | Blacksmiths |
| Nau/Napit | Barbers |
| Khusah/Khusal | Sedan bearers |
| Bhah | Funeral assistants |
| Dui | Porters, labourers |
| Balami | Farmers, traders of water buffalo |
| Nay/Kasai | Butchers |
| Jvagi/Kusle | Tailors, musicians |
| Dva | Drummers |
| Pvah/Pore | Basket weavers, fishermen, sweepers |
| Kulu | Drum makers, cobblers |
| Cyamkhalah/Cyame | Dung bearers, sweepers |

**(च)** Michael Allen को **Hierarchy and Complementarity in Newar Caste, Marriage and Labour Relations** मा नेवाः समाजको जात व्यवस्थाको सोपानलाई यसरी दर्शाइएको छ । (तालिका १, पाना ९५)



AUGUST, 1987 MANKIND Vol.17 No.2

Table 1

A schematic outline of the Newar caste hierarchy

- Pure castes
  - Priestly castes (11%)
    - Deo Brahmin (Hindu priests)
    - Gubhaju (Buddhist priests)
    - Bare (Buddhist ex-monks, mostly goid and silversmiths)
  - High castes (26%)
    - Uray
    - Shrestha
      - Chathare Shrestha
      - Panchthare Shrestha
      - Other "Shrestha"
    - Jyapu
  - Agricultural castes (42%)
  - Clean Service Castes (14%)
    - Chitrakar (painters)
    - Manandhar (oil pressers)
    - (plus about 10 others)
- Impure Castes
  - Unclean Service Castes (5%)
    - Kasai (butchers)
    - Jogi (musicians)
    - (plus about 4 others)
  - Untouchable Castes (2%)
    - Pore (fishermen, once executioners)
    - Kullu (leather-worker)
    - Chyamkhala (night-soil removers)
    - Hara-Huru (night-soil removers)

**(छ)** गोपाल सिंह नेपालीको **The Newars of Nepal** मा नेवाः समाजको जात व्यवस्थाको सोपानलाई यसरी दर्शाइएको छ । (पाना २५७)

257

NEWAR CASTE HIERARCHY




Note: Castes on the same horizontal plane are equal in status, arrow shows the status-claim by the individual caste.

**(ज)** Stephen Michael Greenwold को **The Role of the Priest in Newar Society** मा नेवाः जातिको पुरोहितहरूको बारेमा चर्चा गरेका छन् । उक्त पुस्तकमा पुरोहितको आधारमा जात व्यवस्थाको सोपान देखाइएको छ ।[३७]

Table 1. Major Newar castes in the city of Kathmandu

| Caste | Traditional occupation | Total number of households | Percent of total |
|---|---|---|---|
| DIVISION I. Castes whose *purohita* is Brahman or Vajracharya | | | |
| I–A. *Castes whose body purification rite is performed by the Nau* | | | |
| Deo Brahman | *Purohita* for all Hindu Newars | 39 | .31 |
| Vajracharya | *Purohita* for all Buddhist Newars | 439 | 3.53 |
| Jha Brahman | Temple priests | 22 | .18 |
| Bare | Temple priests with right of membership in Newar Buddhist *vihara* [monasteries]. Also traditionally gold- and silversmiths | 641 | 5.16 |
| Sheshyo | No actual traditional occupation, although many are merchants as well as officials in the government bureaucracy | 3,666 | 29.47 |
| Urhä | Merchants and artisans | 1,098 | 8.83 |
| Jyapu | Farmers | 2,973 | 23.90 |
| Saimi | Owners and workers in mills in which mustard seed is pressed into oil | 737 | 5.93 |
| Khusa | Palanquin bearers and agricultural workers | 210 | 1.76 |
| Pun | Painters of religious pictures | 94 | .76 |
| Chippa | Dyers of cloth | 220 | 1.77 |
| Gathu | Gardeners and cultivators | 78 | .63 |
| Nau | Barbers | 73 | .59 |
| Kau | Blacksmiths | 101 | .81 |
| All other castes of clean status | | 825 | 6.63 |

[37] *Himalayan Anthropology : The Indo- Tibetan Interface*, 1978, Mouton Publishers, पाना ४८५, ४८६ ।

486 STEPHEN MICHAEL GREENWOLD

Table 1.(*continued*)

| Caste | Traditional occupation | Total number of households | Percent of total |
|---|---|---|---|
| DIVISION II. Castes whose *purohita* is not Brahman or Vajracharya | | | |
| Nä | Butchers, sellers of meat, and barbers | 779 | 6.26 |
| Jogi | Musicians and tailors | 144 | 1.16 |
| Kulu | Leather workers | 2 | .01 |
| Chyami | Sweepers | 76 | .61 |
| Pore | Fishermen, sweepers, and (formerly) public executioners | 212 | 1.70 |
| Total number of Newar households | | 12,438 | 100.00 |

**(झ)** Hiroshi Ishii को **Structure and Change of a Newari Festival Organization** मा उनले एउटा गाउँलाई छद्मनाम दिई (कारण ?) जात व्यवस्थाको सोपानलाई देहाय अनुसार चर्चा गरेका छन् ।[३८]

508 HIROSHI ISHII

Table 2. Caste hierarchy in Satepa

Barum (Gubhaju)*
|
Syesyo
|
Jyapu
| (Pai)
Duin—Kau—Saymi (Nau)
|
Untouchables { Nay
|
Jugi }
(Po)

*Castes whose names are shown in parentheses are not resident in Satepa. The explanation about them is given in the text.

[38] *Himalayan Anthropology : The Indo- Tibetan Interface*, 1978, Mouton Publishers, पाना ५०८ ।

(ञ) Declan Quigley को **Ethnicity Without Nationalism : The Newars of Nepal** मा जात व्यवस्थाको सोपानलाई देहाय अनुसार चर्चा गरेका छन् ।[३९]

*The Newar caste hierarchy*

FIGURE 1

| | | *Hindu* | *Buddhist* |
|---|---|---|---|
| I | Priestly castes | Deo Brahmin | Gubhāju/Bare |
| II | High castes | Chathari Shrestha (4) | |
| | | Pācthari Shrestha | Uray |
| | | other 'Shrestha' | |
| III | Farmer caste | Jyāpu | |
| IV | Service castes | Painters, potters, oil pressers, barbers, dyers, etc. | |
| V | Castes from whom water may not be taken | butchers, tailors | |
| VI | Untouchable castes | sweepers | |

(ट) Gérard Toffin को **lntercaste Relations in a Newar Community** मा ललितपुर जिल्ला हालको संरचनामा गोदावरी नगरपालिकामा पर्ने **ग्याढ गं (प्याङ गां)**[४०] नामक तत्कालीन गाउँमा गरेको अध्ययन अनुसार उक्त स्थानका मानिसहरूको लागि जात व्यवस्थाको सोपान देहाय अनुसार रहेको पाइन्छ ।[४१]

| | |
|---|---|
| *barmu — gubhāju*<br>*bare*<br>*shreṣṭha — udās*<br>*jyāpu*<br>*sāymi*<br>*pahi — gaṭhū*<br>*nau*<br>*puṁ* (or *citrakār*)<br>*kau*<br>*bhā* | *ju pi* |
| *nāy — kulū*<br>*jugi* (or *kusle*) | *ma ju pi*<br>(*ti ju pi*) |
| *doṁ*<br>*pwo*<br>*cyāmakhalak* | (*ti ma ju pi*) |

**Figure 1. Hierarchy of the Newar castes according to the inhabitants of Pyangaon**

[39] *European Journal of Sociology (28)*, 1987, पाना १५६ ।

[40] खस / पर्वते भाषा (नेपाली भाषा) को अनुवादमा **प्याङ्गाउँ** पनि भनिने ।

[41] *Himalayan Anthropology : The Indo- Tibetan Interface*, 1978, Mouton Publishers, पाना ४६७ ।

(ठ) Bruce Owens को विद्यावारीधि शोध प्रबन्ध **The Politics of Divinity in the Kathmandu Valley: The Festival of Bungadya Rato Matsyendranath** मा नेवाः समाजको जात व्यवस्थाको सोपानलाई यसरी दर्शाइएको छ । [पाना ८४, ८५]



जरूरीना

85

FIGURE IIb

**Newar Caste Hierarchy:**
**Water Unacceptable Castes (*majyupim*)**

Touchable castes (*thiye jyupim*)

*Sangam* (*Sangat*) - Launderers (*Dhobis*)

*Bha* - Dyers of red cloth, funeral functionaries

*Dwim* (*Duniya, Putuwar, Rajputwar*) - quarry workers, supply red earth used for cleansing and coating mud floors

*Nay* (*Nya*, in Bhaktapur) - butchers, funeral procession musicians

*Kusle* (*Jogi, Darśandhari*) - musicians

Untouchable castes (*thiye majyupim*)

*Kulu* - cobblers, drum-makers

*Pore* - fishers, skinners, traditionally executioners

*Cyamkhala* (*Cyame, Kucikar*) - night-soil remover

*Hara haru* - offspring of *Pore/Cyamkhala* marriage

Note: All of the above castes are endogamous. The *Hara haru* are the result of illicit exogamous unions and assume neither the father's nor mother's caste status. The hierarchical order is essentially that suggested by Toffin (1984), though any hierarchy will shift according to which *majyupim*'s perspective is used.

§§§

Symbols Used, Figure II a.b.

——————— = boundary of endogamy

[ = encloses intermarrying sub-castes

() = alternate appelation

These diagrams are not exhaustive, and represent an approximate consensus with respect to hierarchical order. Data is drawn primarily from Toffin (1984), Nepali (1965), Gutschow (1975), and my own research.

**(ड)** Anil M Shakya ले आफ्नो **Newar, Marriage and Kinship in Kathmandu, Nepal** नामक विद्यावारीधि शोध प्रबन्धमा **यें देय्** (काठमाडौं पुरानो शहर) को **क्वने** क्षेत्र अर्थात् तल्लको काठमाडौं / दक्षिणी काठमाडौंमा देहाय अनुसारको जात व्यवस्थाको सोपान दर्शाएको छ । [पाना ४२]

जरूरीना

Table 2.4: Caste breakdown of southern Kathmandu (*kwaḥne*) residents

| Main divisions | Caste group divisions | Hereditary occupation | Non-honorific caste names | Honorific names of castes and caste sub-groups | House -holds | % |
|---|---|---|---|---|---|---|
| *laḥ cale jū pī* Water acceptable | Priestly castes | Hindu priests | Dyaḥbhāju | Rājopādhyāya | 11 | 0.2 |
| | | Buddhist priests | Gubhāju | Vajrācārya | 193 | 3.8 |
| | | Goldsmith, silversmiths | Bare | Śākya | 416 | 8.2 |
| | High castes | Merchants, civil servants | Śeśyaḥ | Śreṣṭha, Joshi, Malla, Pradhān, Rājbhandāri, Vaidhya, Māthemā, Gorkhāli, Karmacārya etc. | 1108 | 21.9 |
| | | Traders and craftsmen | Udāy | Tulādhar, Kaṃsākār, Tāmrākār, Baniyā, Rājkarnikār, Sthāpit Sikhrākār, Silpakār, Sindurākār, | 302 | 6 |
| | Agricultural castes | Farmers and Potters | Jyāpu, Kumā | Maharjan, Dāgol, Suwāl, Jyāpu , Siñ, Siñsuwāl, Munikār Prajāpati, | 1392 | 27.6 |
| | Clean service castes | Oil-pressers | Sāymi | Mānandhar, Sāymi | 349 | 6.9 |
| | | Palanquin bearers | Khusaḥ | Taṇḍukār | 36 | 0.7 |
| | | Barber | Nau | Nāpit | 33 | 0.6 |
| | | Blacksmiths | Kau | Nakarmi | 49 | 1.0 |
| | | Post-funeral duties | Bhā | Kāranjit | 36 | 0.7 |
| | | Flower sellers | Gathu | Māli, Mālākār | 16 | 0.3 |
| | | Painters | Puñ | Citrakār | 39 | 0.8 |
| | | Dyers | Chipā | Ranjitkār, Ranjit | 212 | 4.2 |
| | | Carriers | Dui | Putuwār | 2 | 0.03 |
| ------------- | ------------- | ------------------ | -Water line- | ---------------------- | -------- | ------ |
| *laḥ cale majū pī* Water unacceptable | Unclean service castes | Butcher | Nāy | Shāhi, Khaḍgi, Kasāi | 342 | 6.8 |
| | | Musician, Tailors, post-funeral duties, | Jogi | Kapāli, Darshandhāri | 53 | 1.0 |
| | | Washermen | Dhubyā | Rajaka | 3 | 0.05 |
| | Untouchable castes | Fishermen and Sweeper | Pode | Nepāl, Dyaḥlā, Pode | 157 | 3.1 |
| | | Sweeper | Cyāmkhalaḥ | Cyāme, Nepāli | 11 | 0.2 |
| | | Non-Newars | | | 297 | 5.9 |
| Total | | | | | 5,057 | 100 |

५. **<u>जुगि उप-जातिको संक्षेप परिचय</u>** : नेवाः जाति भित्रका विभिन्न जातजातिहरू मध्ये **जुगि उप-जाति** पनि एक हो । नेपाः उपत्यकामा यस जातिको अस्तित्व लिच्छवीकाल समय देखि देखिन्छ ।

**(क)** सुदर्शना दर्शनधारीद्वारा लिखित आलेखमा **जुगि उप-जाति**को परिचय यसरी दिइएको छ :-[४२]

> कपाली जातियात म्हसीक वीगु ज्वलय् थीथी मनूतय् थीथी कथंया विचाः खनदु । कपाली जातियात जोगी, दर्शनधारी व कुश्ले नं धाइ । काम, क्रोध, लोभ, मोहय् गथनामवेंस आध्यात्म चिन्तन यानाच्वंपिं वा उग्याःगु सांसारिक बन्धनं जोगजुया च्वनेगुलिइ प्रयत्नरतपिंत हे जोगी धाइ । समाजय् रोग व्याधिं कयाच्वंपिंत थःगु तन्त्रबलं लायकगु, दर्शन धारण यायगु शक्ति दुपिन्त दर्शनधारी धाइ वा दर्शन यायत योग्यगु आचरण याइपिं हे दर्शनधारी खः । कुश ( गुगु अपिकं पवित्रगु घाँय् खः उग्याःगु) या पाखें उत्पन्न जूपिं जुयाः कुश्ले धकाः नं धायगु याः । कुश्ले ( कुशल) तय्गु उत्पत्तिया खँयात कयाः थुकथं ह्ययथनातःगु दु — महादेवयानं कुशयाह्म मनू दयकाः "जीव" दान वियाः कुशलनाथ योगीया जन्म जुल धकाः स्मृति शास्त्रय् च्वयातःगु दु । थ्व हे कुशलनाथया अनुयायीतय्त कुशल, दर्शनधारी, कपाली धकाः धायगु यात ।

यस आलेखांशको अनुवाद यस प्रकारले छ :-

***कपाली जातिलाई चिनाउने क्रममा विभिन्न मानिसहरूको विभिन्न प्रकारको विचार देखिन्छ । कपाली जातिलाई जोगी, दर्शनधारी तथा कुश्ले पनि भनिन्छ । काम, क्रोध, लोभ, मोहमा नअल्झिकन आध्यात्म चिन्तन गर्नेहरू वा त्यस प्रकारको सांसारिक बन्धनबाट जोगेर बस्ने प्रयत्नरतहरू नै जोगी भनिन्छ । समाजमा रोग व्याधिले पीडितहरूलाई आफ्नो तन्त्रबलले बिसो पार्ने, दर्शन धारण गर्ने शक्ति भएकाहरू दर्शनधारी भनिन्छ वा दर्शन गर्नलाई योग्य आचरण भएका नै दर्शनधारी हुन् । कुश (जुन अधिक पवित्र घाँस हो त्यस्तो) को तर्फबाट उत्पन्न भएको हुनाले कुश्ले पनि भनिने गरिन्छ । कुश्ले***

---

[42] सुदर्शना दर्शनधारी, https://jheeguinformation.com/.

*(कुशले) हरूको उत्पत्तिको कुरालाई लिएर यसरी उभ्याइएको छ — महादेवले कुशको मान्छे बनाएर "जीव" दान दिएर कुशलनाथ योगीको जन्म भयो भनि सुमति शास्त्रमा लेखिएको छ । यही कुशलनाथको अनुयायीहरूलाई कुशले, दर्शनधारी, कपाली भनेर भन्ने गरियो ।*

**(ख)** जुगि उप-जातिले देहायका थरहरू प्रयोग गर्ने गरेको पाइन्छ ।

१) **कपाली** (कपाली),
२) **कु(श्ल** (कुश्ले),
३) **कुसलनाथ** (कुसलनाथ),
४) **कुस्ल** (कुस्ले),
५) **कुस्ल्या** (कुस्ल्या),
६) **आगी** (जोगी),
७) **दन्शणधानी** (दर्शणधारी),
८) **दन्शन** (दर्शन),
९) **दन्शनधानी** (दर्शनधारी),
१०) **यागी** (योगी),
११) **सुविकान** (सुचिकार) ।

**(ग)** जुगि उप-जातिले **दगुघ्८ / दुगुघ्८ / दउघ्८** (देगुघः / दुगुघः / देउघः) अर्थात् **कुलदेवताका** रूपमा **गोरखनाथ**लाई मान्ने गर्दछन् । त्यसै गरी **वाला व८ङ्क** (बाला चःह्रे) अर्थात् बाला चतुर्दशीका दिन प्रायः जुगिहरूको **दगु / दिगु / दउ पूजा** (देगु / दिगु / देउ पुजा) अर्थात् **कुल देवताको पुजा** हुने गर्दछ । कतिपय स्थानमा **सिथि नख८** (सिथि नखः) का दिन पनि हुने गर्दछ ।

**(घ)** जुगि उप-जाति **नाथ सम्प्रदाय**का हुन् । त्यसैले प्रायः पुरुषहरूको मध्यनाममा **नाथ** उल्लेख भएको देख्न सकिन्छ । जस्तैः- वीरनाथ, रूद्रनाथ, केदारनाथ, इत्यादि ।

**(ङ)** जुगि उप-जातिका मानिसहरू **शिव गोत्र**का मानिसहरू हुन् ।

**(च)** परम्परागत मान्यता अनुसार जुगि उप-जातिको विवाह जुगि उप-जाति भित्र नै हुन्छ, अर्थात् सहजातीय एवं सहगोत्रीय विवाह हुने गर्दछ ।

**(छ)** जुगि उप-जातिमा आफ्नै जातको पुरोहित हुन्छ । हामी उनीहरूलाई **ग्ववा४ङ् (गवबाःजु)** भन्छौं । यिनीहरू **बर्मुं (ब्राह्मण)** वा **गुभाजु (बज्राचार्य)** नभएर जुगि उप-जातिकै मानिस हुन् ।

**(ज)** जुगि उप-जातिमा कसैको मृत्यु भएपछी उसको मृतशरीरलाई समाधी बनाएर गाढ्ने गरिन्छ, जसलाई नेपाल भाषामा **सिङ्ह्म थ्ूनगु (सिइम्ह थुनेगु)** भनिन्छ । नेवाः जाति भित्र मृतशरीरलाई गाढ्ने परम्परा भएको जुगि उप-जाति एकमात्र हो ।

**(झ)** जुगि उप-जातिको मुख्य गरी तीन उप-समूहहरू रहेको मानिन्छ । ती उपसमूह **कपाली, दर्शनधारी** तथा **कुस्ले** हुन् । जुगि उप-जातिमा प्रयोग गर्ने अरू विविध थरहरू यी तीन शब्दकै व्युत्पत्ति रहेको मान्न सकिन्छ । जुगि उप-जाति भित्र यी तीन फरक-फरक समूह भएतापनि वर्तमान परिपेक्ष्यमा यो भेद लोपप्रायः भइसकेको देखिन्छ । जुगि उप-जातिका सबैले यी तीन मध्ये जुनसुकै थर प्रयोग गर्ने प्रचलन बन्न पुगेको हुँदा यी तीन भेदहरूको भिन्नता अदृश्य भइसकेको अवस्था देखिन्छ ।

**(ञ)** Anil M Shakya ले आफ्नो **Newar, Marriage and Kinship in Kathmandu, Nepal** नामक विद्यावारीधि शोध प्रबन्धमा जुगि उप-जातिको तीन भेदलाई औंल्याएका छन् । उनका अनुसार जुगि उप-जातिका तीन भेदहरूमा **दर्शनधारी, कपाली** तथा **दन्या** समूह रहेका छन् । कपालीहरूले अरू नेवाःहरूको मृत्यु संस्कारको दायित्व पूरा गरेझैं कपालीहरू स्वयंको मृत्यु संस्कारको दायित्व पूरा गर्ने समूह **दन्या** हो । यस समूहले कपालीहरूको मृत्यु संस्कारको दायित्वका साथै उनीहरूको हजामका रूपमा पनि काम गर्छन् । यस समूहलाई **बेपाली** भन्ने पनि गरिएको पाइन्छ । दन्या वा बेपालीहरूले पनि कपाली थर नै प्रयोग गर्ने गरेको उल्लेख छ । त्यसै गरी उक्त शोधमा

कपालीहरूको पुरोहितका रूपमा दर्शनधारी समूहलाई औँल्याइएको छ । यद्यपि हाल यी भेदहरू अदृश्य जस्तै भइसकेको अवस्था देखिन्छ ।

(ट) दक्षिण एसियाको परिपेक्ष्यमा हेर्दा **कनफट्टा जोगी** वा **नाथ सम्प्रदाय**बाट उत्पत्ति भई नेवाः समाजमा **जुगि उप-जाति** समुदायले आफ्नो स्वरूप लिएको देखिन्छ । यसरी नेपालकै अर्को खस-आर्य समुदाय अन्तर्गत **दशनामी सन्यासी** समुदायको उत्पत्तिसँग पनि समरूपता रहेको देखिन्छ । विभिन्न पृष्ठभूमीबाट नेपाल मन्दलमा बसोबास गर्न आई एउटा संयुक्ततामा अन्तरघुलन हुने क्रममा यही **कन्फट्टा जोगी, नाथ योगी** भनिने समुदायहरू नेपाल मन्दलमा प्रवेश गरी नेवाः जातिको **जुगि उप-जाति** भएको देखिन्छ । यिनै **कन्फट्टा जोगी, नाथ योगी**हरू खस-आर्य समुदायमा प्रवेश गरे, र **दशनामी सन्यासी** भए ।[४३] यिनै **कन्फट्टा जोगी, नाथ योगी**हरू तिब्बतमा प्रवेश गरे, र **དགེ་ལུགས་པ་ (गेलुक्पा)** सम्प्रदायको निर्माण गरे ।[४४] बर्दिया जिल्लामा रहेका थारुहरूको थर मध्ये **कन्फट्टा जोगी** भन्ने थर पनि पाइन्छ ।[४५]

(ठ) **हिन्दू धर्मावलम्बमा शैव सम्प्रदाय**को एक उप-सम्प्रदायका रूपमा **नाथ सम्प्रदाय** भनिन्छ । यस सम्प्रदायमा **योग**को महत्वपूर्ण भूमिका रहेको हुन्छ । यही **योग**को अभ्यास गर्ने सम्प्रदाय भएकाले **योगी** पनि भन्ने गरेको पाइन्छ । भारोपेली भाषाहरूमा **"य"** तथा **"ज"** वर्ण बीच परस्परता भएको भाषावैज्ञानिक पद्दति प्रकृति देख्न सकिन्छ । खस/पर्वते भाषा (नेपाली भाषा) मा नै केही समय अगाडी **"य"** वर्णलाई **"बुढो ज"** पनि भन्ने गरिन्थ्यो । मैथिली भाषामा पनि **"य-ज"** परस्परता देखिन्छ, जस्तै :- यादब - जादब, याद - जाद, यसोदा - जसोदा । यसरी नै आर्य भाषा समूहका अन्य उदाहरण पनि छन् । यमुना नदी, जमुना नदी । यौवन, जोवन । यसरी **योगी** तथा **जोगी** परस्परतामा विकास भएको भन्ने बुझ्न सकिन्छ ।

---

43 *Cultural Crisis of Caste Renouncer: A Study of Dasnami Sanyasi Identity in Nep*al, Madhu Giri, Molung Educational Frontier, 2019.

44 *Tibetan and Zen Buddhism in Britain: Transplantation, Development and Adaptation*, David N. Kay, Routledge Curzon, 2004.

45 *थारू जातिको थर, उपथर सूचीकरण*, डा. कृष्णराज सर्वहारी, थारू समुदायको थर सूचीकरण सम्बन्धि छलफल तथा अन्तक्रिया कार्यक्रममा प्रस्तुत कार्यपत्र, थारु आयोग, २०७७ फागुन २८ गते ।

**(ड)** **नेपाल भाषा**लाई भाषाविज्ञानमा **चिनियाँ-तिब्बती भाषा परिवार**को **तिब्बती-बर्मेली भाषा समूह**मा राखिन्छ । यद्यपि **नेपाल भाषा**लाई विशुद्ध तिब्बती-बर्मेली भाषा मान्न कठिन छ । यसमा **भारोपली भाषा परिवार**को **आर्य भाषा समूह**बाट पनि निकै प्रभाव परेको देखिन्छ ।[४६] [४७] भाषाविज्ञान लगायतको प्राज्ञिक अध्ययनमा Tibetosphere तथा Indosphere भन्ने गरिन्छ । यही **Tibetosphere**[४८] तथा **Indosphere**[४९] को मध्यमा अवस्थित भई यी दुई क्षेत्रको अन्तरसम्बन्ध, संगम तथा प्रभावमा रही एउटा पृथक वा amalgamation को क्षेत्रलाई मैले **Nepasphere** भन्ने गरेको छु । यसरी भारतीय उपमहाद्वीपबाट नै नेपाल मन्दल प्रवेश गरेका **योगी / जोगी**हरूबाट यो शब्दले नेपाल भाषामा प्रवेश पाएको हुनुपर्छ ।

**(ढ)** नेपाल भाषामा **"उ (ओ)"** वर्ण छैन । संस्कृत भाषा पनि नेवाःहरूले आफ्नै लिपिमा लेख्ने भएकाले लिपिमा संस्कृतका वर्णहरू पनि विकास भएकोसम्म हो । त्यसैले आर्यमूलीय **"जोगी"** शब्द नेपाल भाषामा प्रवेश हुँदा **"जुगि (जुगि)"** वा **"ज्वगि (ज्वगि)"** हुन पुगेको देखिन्छ ।

**(ण)** लक्ष्मी प्रसाद कपाली, राजु कपाली तथा सुनिल कपालीले लेखेको "**कपाली : संक्षिप्त परिचय**"का अनुसार, ***"शैव-पाशुपत जोगी सिद्ध संन्यासीहरूको धर्म नै भ्रमण गर्नु पनि भएकोले नेपालमा उनीहरू पनि आए होलान् । श्री पशुपतिनाथको शरणमा बस्नका लागि भारतका शैव-सिद्धान्ती पाशुपत, कापालिक आदि सम्प्रदायका अनुयायीहरू यस पावन साधन भूमिमा लिच्छविकालमा नै बढी जमघट भएको अनुमान गर्न सक्ने कुरा स्व. कूल चन्द्रजीले आफ्नो पुस्तकमा उल्लेख गरिएको छ ।"*** (पाना ३१) सोही पुस्तकमा नेपालमा गोरख पन्थ तथा कापालिक इतिहासको खण्ड समावेश छ । (पाना ४०) पुस्तकका अनुसार, ***"नेपाल उपत्यकामा स्वयम गोरखनाथ आएको कुरा परम्पराद्वारा स्वीकृत भएता पनि गोरखनाथको वास्तविक प्रचार दुई तीन शताब्दी पछी***

---

46 चीन- सँय् ताषा पनिवानय् नेपालताषा *(चीन-सँय् भाषा परिवारय् नेपालभाषा)*, काशिनाथ तमोट, भाषाविज्ञान परिचय, पाना ३६ — ३८, डा. तुयु बहादुर महर्जनन, नेसं ११२८ ।

47 *Newari Language and Linguistics: Conspectus*, Tej R. Kansakar, CNAS, Tribhuvan University, Vol. VIII, No. 2, June, 1981.

48 *Mapping the Minority Languages of the Eastern Tibetosphere*, Hiroyuki Suzuki et. al., January 2017, Pg 1.

49 *Area of linguistic and cultural influence of India, Language variation: Papers on variation and change in the Sinosphere and in the Indosphere in honour of James A. Matisoff*, David Bradley et. al., C.E. 2003, Pg. 2.

*भएको अनुमान हुन्छ । गोरखनाथ नेपाल उपत्यकामा आगमन राजा नरेन्द्र देवको पालामा भएको अनुमान गरिएको छ । फर्पिङमा १४ औं शताब्दीका अन्त्यतिर अचिन्त्यनाथ योगीले गोरखनाथको पाषण पाडुका स्थापित गरेको कुरा त्यहाँ भएका अभिलेखमा प्राप्त भएको छ । त्यसबेला जयस्थिति मल्लको शासन थियो । ने.सं. ५८५ शताब्दीमा गौड देश (बंगाल) बाट आएका चैतन्यनाथ योगीले मरु टोल स्थित "काष्ठमण्डप" नामक भवनमा राखेका एउटा अभिलेखबाट अवधुतहरूलाई बस्ने र खुवाउने व्यवस्थाका साथ योगीहरूलाई प्रति वर्ष भण्डारा खुवाउन गुठी राखेको सुवर्ण पत्रमा उल्लेख गरिएको छ । "प्राचिन नेपाल - अङ्क ५८" १६औं शताब्दीका अर्को ताम्रपत्रद्वारा छ्वलनाथ योगीले जोगीलाई खुवाउने गुठी राखेको कुरा उल्लेख छ ।"*
सोही पुस्तकमा (पाना ४५) जुगि उप-जाति समुदायको इतिहासको चर्चा गरिएको छ, *"साँखुको शिलालेखमा अमृत मल्लको पालामा अभिलेख ने.सं. ६७९ कुसुल्या जोगी उल्लेख गरि राखेको छ । "नेपाल भाषाया जात" । बनेपाको दथुटोलको अभिलेख ने.सं. ७५७ श्री गोरख पादुकामा हाकुनाथ दर्शनधारीले दियो बाली गाउँमा बस्नेहरूलाई दक्षिणा दिएको कुरा उल्लेख गरिएको छ । "भक्तपुर शिलालेष सूचि" - शंकरमान राजवंशी । मरुसत्तलको ताम्रपत्र ने.सं. ४५४ मा जुगी उल्लेख गरिराखेको छ ।"*

**(त)** यसरी **नेवाः जाति** भित्र पनि आफ्नो छुट्टै पहिचान परिचय बोकेको **जुगि उप-जाति समुदाय** छ । अतः **जुगि उप-जाति** नेवाः जाति अन्तर्गतकै एक अभिन्न, अविछिन्न साथै आफ्नै पृथकता एवं अन्य नेवाः उप-जातिसँग समरूपता पनि भएको उप-जाति वा उप-समूह हो ।

६. <u>**जुगि उप-जातिको परम्परागत पेशा :**</u> नेवाः समाजको परम्परागत जीवनशैलीमा जुगि उप-जातिका मानिसहरूले देहायका पेशा काम अवलम्बन गर्ने गर्थे / गर्छन् ।

**(क)** नेवाः समाजको मृत्यु संस्कारमा जुगि उप-जातिको भूमिका रहेको पाइन्छ । ऐतिहासिक नेवाः बस्तीहरूमा **प् ्यकालँ (प्यकालँ)** अर्थात् चारदोबाटो अथवा **द्व्याः (द्वपाः)** अर्थात् दोबाटोको केन्द्र वा मध्यलाई **छ्वास (छवास)** भनेर चिनिन्छ । यस्ता **छवास**लाई **छ्वास अजिमा (छवास अजिमा)** वास गर्ने स्थानका रूपमा लिइन्छ । कसैको

घरपरिवारमा कुनै व्यक्तिको मृत्यु भएपछी नीज मृतकका लत्ता कपडाहरू **छवासमा** लगेर विसर्जित गरिन्छ । यसलाई **छ्वासय् वायगु (छवासय् वायेगु)** भनिन्छ । यी अशुद्ध मानिएका लत्ताकपडाहरूलाई फुकेर शुद्ध बनाई जुगि उप-जातिका मानिसले लैजान्छन् । त्यसैले यस्ता **छवास** स्थानहरू निकट **सतःछैं (सत्तलघर)** बनाएर जुगि उप-जातिका मानिसहरूलाई राखिन्छ । यसरी नेवाः समाजको मृत्यु संस्कारमा जुगि उप-जातिको सांस्कृतिक तथा परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछैं (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(ख)** जुगि उप-जातिको तन्त्र विद्याले भूतप्रेतको सामना गर्न सक्ने तथा भूतप्रेत पञ्छाउन सक्ने मान्यता रहेको पाइन्छ । तसर्थ यही भूतप्रेत पन्छाउनका लागि **म्ग्यकालँ (प्यकालँ)** तथा **द्वपा8 (द्वपाः)** नजीकै **सतःछैं (सत्तलघर)** बनाई जुगि उप-जातिका मानिसहरूलाई राख्ने गरिन्छ । जुगि उप-जातिका मानिसहरूलाई तान्त्रिक पुरोहित पनि मानिन्छ । यसरी नेवाः समाजको तान्त्रिक संस्कारमा जुगि उप-जातिको सांस्कृतिक तथा परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछैं (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(ग)** त्यसै गरी विभिन्न स्थानका **द्यग8 / म्ग्यग8 (देगः / घगः)** अर्थात् मन्दिरको रेखदेखका लागि त्यस्ता मन्दिर वरपरको **सतःछैं (सत्तलघर)** मा पनि जुगि उप-जातिको बसोबास रहेको पाइन्छ । उक्त मन्दिरको रेखदेख गर्ने, सरसफाई गर्ने, इत्यादीका धार्मिक सांस्कृतिक कामकर्तव्यको पूर्तीका लागि जुगि उप-जातिका मानिसहरूलाई राखिएको हुन्छ । यसरी नेवाः समाजको धार्मिक संस्कारमा जुगि उप-जातिको सांस्कृतिक तथा परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछैं (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(घ)** कसैको मृत्यु हुँदा मृत्यु भएको सात दिन पछी मृतकको नाममा भात लगायतका खाद्यान्न बनाइने गरिन्छ । यस भातलाई **न्ह्यनूमा (न्हयनुमा)** भनिन्छ । यस्ता **न्हयनुमा** जुगि उप-जातिका मानिसहरूलाई दिने गरिन्छ । प्रत्येक घरको मूलढोका अगाडी **पिखालखू / पिखालाखि (पिखालखु / पिखालाखि)** भन्ने हुन्छ । नेवाः जातिको बसोबास

भएका घरको मूलढोका बाहिर भुइँमा रातो माटोले लिपेर पुजा गरेको देख्न सकिन्छ । हिजोआज मण्डला आकारमा धातुबाट आकृति बनाएर राख्ने गरेको पनि देखिन्छ । यही **पिखालखु / पिखालाखि** हो । मृतकको घर अगाडीको यसै **पिखालखु**मा उभिएर मृतकको परिवारबाट हाम्रो जातले **न्हय्नुमा** थापेर लिन्छन् । नेवाः जातिको मृत्यु संस्कारको यो एक प्रमुख परम्परा हो । यसरी मृतकको नाममा चढाइने न्हय्नुमालाई हाम्रो जातले ग्रहण गरेमा मात्र मृतकको आत्मा तर्ने भन्ने धार्मिक आस्था छ । यसै मृत्यु संस्कारको परिपूर्तीका लागि टोल-टोलमा **सतःछेँ (सत्तलघर)** बनाई जुगि उप-जातिका मानिसहरू राख्ने गरिन्थ्यो । यसरी नेवाः समाजको मृत्यु संस्कारमा जुगि उप-जातिको परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछेँ (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(ङ)** नेवाः समाजमा कुनै प्रकारको चाडपर्व वा सांस्कृतिक रीतिजन्य कार्य भएमा आफ्नो मृतक पुर्खाको नाममा खाद्यान्न भाग चढाउने गरिन्छ । नेवाः समाजको जुनसुकै भोजमा मानिसहरूलाई सरह एक भाग देवतालाई तथा एक भाग मृतकलाई भनि छुट्याइएको हुन्छ । देवतालाई राखिएको भागलाई **ग्ग8ब्व (घःब्व)** भनिन्छ भने मृतकलाई राखिएको भागलाई **सिकीब्व (सिकीब्व)** भनिन्छ । सोही **सिकीब्व** जुगि उप-जातिका मानिसहरूलाई दिनुपर्ने हुन्छ । यसरी **सिकीब्व** लिने कार्यलाई **ग्वालय् कायगु (त्वालय् कायेगु)** वा **ग्वा8ॐ कायगु (त्वाःजं कायेगु)** भनिन्छ । यो परम्परा विभिन्न स्थानहरूमा विभिन्न स्वरूपमा गरेको पाइन्छ । कतिपय स्थानहरूमा जुगि उप-जातिका मानिसहरू आ-आफै घर-घर गएर लिन जान्छन् । कतिपय स्थानहरूमा लिन आउ भनि बोलाउन आउँछन् । कतिपय स्थानहरूमा हाम्रै घर आँगनमा दिन ल्याउँछन् । यसै संस्कारको परिपूर्तीका लागि टोल-टोलमा **सतःछेँ (सत्तलघर)** बनाई जुगि उप-जातिका मानिसहरू राख्ने गरिन्थ्यो । यसरी नेवाः समाजको संस्कारमा जुगि उप-जातिको परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछेँ (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(च)** उपरोक्त उल्लेख मृत्यु संस्कारसँग सम्बन्धित सबै प्रथाजन्य कार्य गर्नका लागि प्रत्येक टोलमा एक/एक परिवार जुगि उप-जातिका मानिसहरूलाई राख्ने गरिन्छ । मूलतः

**ग्वालय् कायगु (त्वालय् कायेगु)** को शाब्दिक अर्थ **"टोलमा लिनु"** हो । त्यसै गरी **ग्वाःजं कायगु (त्वाःजं कायेगु)** को शाब्दिक अर्थ **"टोलको जन भई लिनु"** हो । त्यसैले नै प्रत्येक टोल-टोलको बासिन्दाका लागि आफ्नै टोलको जुगि हुने गर्दछ । आ-आफ्नो टोलमा बसिआएका जुगि उप-जातिका मानिसहरूबाट नै यी रीतिथिति पूर्ती गर्नुपर्ने भएकाले जुगि उप-जातिका मानिसहरूलाई **ग्वाःजं (त्वाःजं)** अर्थात् **टोलको जन** पनि भन्ने गरिन्छ । यसरी नेवाः समाजको मृत्यु संस्कारमा जुगि उप-जातिको परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछेँ (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(छ)** जुगि उप-जातिले पुख्यौंली गरिआएको पेशा मध्ये **सुचिकाः ज्या (सुचिकाः ज्या)** अर्थात् सिलाई कार्य पनि रहेको पाइन्छ । आफू बसिआएको घर मुनी रहेको **सतः (सत्तल)** मा सिलाई मिसिन राखी सिलाई कार्य गर्दै आएको पुख्यौंली अभ्यास पाइन्छ । यसरी नेवाः समाजको पेशा तथा कार्यविभाजन संस्कारमा जुगि उप-जातिको पेशाजन्य भूमिका देखिन्छ भने **सतःछेँ (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

**(ज)** जुगि उप-जातिका मानिसहरू तन्त्रविद्याको प्रयोग गर्ने काम पनि गरेको पाइन्छ । यसमा महिलाहरू **घ्यःमां (घःमां)** अर्थात् झारफुक गर्ने महिलाका रूपमा काम गरेको एवं पुरुषहरू **वैद्य (बैद्य)** अर्थात् झारफुक गर्ने पुरुषका रूपमा काम गरेको पाइन्छ ।

**(झ)** जुगि उप-जातिका महिलाहरू **अजि / ऐचा / दिदि अजि / दिनि अजि (अजि / ऐचा / दिदि अजि / दिरि अजि)** अर्थात् सुँडेनीको काम गर्ने गरेको पनि पाइन्छ । यसमा बच्चा जन्मिने प्रक्रियामा सहजिकरण मात्र नभएर गर्भवती देखि सुत्केरी स्यहार्ने एवं आवश्यक रीतिथिति धार्मिक कार्य पनि गर्ने हुन्छ ।

**(ञ)** जुगि उप-जातिको परम्परागत **बाजं (बाजं)** अर्थात् बाजा भनि **म्वहालि / मुहालि / म्वाय्लि (म्वहालि / मुहालि / म्वाय्लि)** बाजा हो । नेवाः समाजमा **म्वाय्लि बाजा**को विशेष महत्व रहेको पाइन्छ । **म्वाय्लि बाजा**को प्रयोजन **भिंज्या (भिंज्या)** अर्थात् सुमंगल कार्यमा गरिन्छ । जस्तै विवाहको अवशरमा **म्वाय्लि** बजाइन्छ । मन्दिरहरूमा

**म्वाय्‌लि बाजा** बजाइन्छ । यस बाजाले देवीदेवतालाई आकर्षित पारी ल्याउने क्षमता रहेको जनआस्था छ । मन्दिरहरूको स्थापना गर्दा वा देवीदेवताको मूर्तीलाई स्थानान्तरण गर्दा यो बाजा बजाउन महत्वपूर्ण मानिन्छ । जात्रापर्वमा पनि **म्वाय्‌लि बाजा**को प्रयोग गरिन्छ । नेवाः जातिको अधिकांश सांस्कृतिक तथा परम्परागत कार्यमा यो बाजा **मद्यूकं मगा8गु (मदयूकं मगाःगु)** अर्थात् नभै नहुने बाजाका रूपमा लिइन्छ । यसरी नेवाः समाजको धार्मिक संस्कारमा जुगि उप-जातिको सांस्कृतिक तथा परम्परागत एवं प्रथाजन्य भूमिका देखिन्छ भने **सतःछेँ (सत्तलघर)** को वास हुनुको कारण पनि देखिन्छ ।

७. <u>**जुगि उप-जातिलाई हुने जातिय विभेद :**</u> जात व्यवस्थामा जुगि उप-जाति एक उत्पीडित समुदाय हो । हामी जातका आधारमा विभेद, भेदभाव, छुवाछुत, वहिष्करण, अवहेलना लगायत जात व्यवस्थाले निम्त्याउने विभिन्न प्रकारका हिंसा तथा असमानताको शिकार हुन बाध्य भएका समुदाय हौं ।

**(क)** नेपाल संवत् ५०० सालमा **नारदस्मृति**लाई नेपाल भाषामा उतार गरी नेवाः समाजलाई जात व्यवस्थामा वर्गिकरण गरेको इतिहासले बताउँछ । **न्यायविकासिनी**मा **४ जात कुस्ले** भन्ने उल्लेख गरिएको छ ।[५०]

**(ख)** **मुलुकी ऐन, १९१०** ले संस्थागत गरेको जात व्यवस्थामा **कुस्ले** नामले जुगि उप-जातिलाई **पानी नचल्ने तर छोइछिटो हाल्न नपर्ने** भनि वर्गिकरण गरिएको थियो । यसबाट कानूनले नै विभेद संस्थागत गरेको प्रस्ट हुन्छ ।

**(ग)** Francis Buchanan Hamilton को ***An Account of the Kingdom of Nepal*** (सन् १८१९) मा **कुस्ले जाति**को उल्लेख गरेको पाइन्छ । यसमा उनले **कुस्ले जाति**लाई अशुद्ध मान्ने भन्ने उल्लेख गरिएको पाइन्छ । [पाठ १, पाना ३७]

---

[50] *जयस्थिति मल्लको सुधार,* चन्द्रविक्रम बुढाथोकी, साझा प्रकाशन, वि.सं. २०३९ ।

(घ) David N. Gellner को ***Low Castes in Lalitpur*** नामक लेखमा पनि **कपाली**हरूलाई समावेश गरिएको पाइन्छ ।

(ङ) Michael Allen ले आफ्नो ***Hierarchy and Complementarity in Newar Caste, Marriage and Labour Relations*** मा Unclean castes अन्तर्गत **Jogi** भनि उल्लेख गरेका छन् । [लेखको पाना ४, लेख समवेश पुस्तक *Mankind*, Aug, 1987, Vol. 17, No. 2, को पाना ९५]

(च) गोपाल सिंह नेपालीको ***The Newars of Nepal*** मा पनि **Kusle (or Jogi)** भनि Unclean Castes मा वर्गिकरण गरेको पाइन्छ । [पाना २५७]

(छ) Hiroshi Ishii को ***Structure and Change of a Newari Festival Organization मा Jugi*** लाई Untouchables को वर्गिकरणमा राखिएको छ ।[*Himalayan Anthropology : The Indo- Tibetan Interface*, 1978, Mouton Publishers, पाना ५०८]

(ज) Declan Quigley को ***Ethnicity Without Nationalism : The Newars of Nepal*** मा Castes from whom water may not be taken मा **tailors** भनि राखिएको छ । [*European Journal of Sociology (28)*, 1987, पाना १५६]

(झ) Anil M Shakya को आफ्नो ***Newar, Marriage and Kinship in Kathmandu, Nepal*** मा Water Unacceptable भित्र Unclean service castes मा **Jogi (Kapali, Darshandhari)** भनि उल्लेख गरिएको छ । [पाना ४२]

(ञ) धन बहादुर कुँवरको नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विषयमा विद्यावारिधि (पीएच्.डी.) उपाधिका निमित्त मानविकी तथा सामाजिकशास्त्र सङ्कायमा प्रस्तुत ***"काठमाडौं उपत्यकाका कुसले जातिको सामाजिक तथा धार्मिक जीवन र परिवर्तनका स्वरूपहरू"*** शीर्षकको शोध प्रबन्धमा जुगि उप-जातिले भोग्ने जातिय विभेद, छुवाछुत

तथा यसको प्रभाव जुगि उप-जातिका मानिसहरूको शिक्षा, रोजगार, आर्थिक अवस्था लगायतमा कसरी परेको छ भन्ने तथ्यलाई अघि सारिएको छ ।

**(ट)** तथापि राज्यसँग नेवाः जाति भित्रका जातजातिहरूको विखण्डित तथ्याङ्क छैन । राज्यले नेवाः जातिको समष्टिगत तथ्याङ्क मात्र राख्ने गरेको हुनाले नेवाः जाति भित्र जात व्यवस्थाका कारण सिमान्तकृत समुदायको वास्तविक अवस्था यकीन हुने तथ्याङ्क लगायतका आधारहरू राज्यसँग छैन ।

८. **<u>सतःछें तथा जुगि उप-जातिको ऐतिहासिक, सांस्कृतिक एवं परम्परागत सम्बन्ध</u>** : नेवाः जातिको परम्परागत तथा सांस्कृतिक प्रचलन प्रथाको आपूर्तीका लागि ऐतिहासिक कालखण्डदेखि **जुगि उप-जाति**का मानिसहरू **सतःछें (सत्तलघर)** मा बसोबास गर्दैआएको तथ्य पुष्टी हुन्छ ।

**(क)** जुगि उप-जातिका मानिसहरूको बसोबास केकसरी **सतःछें (सत्तलघर)** मा हुन गयो भन्ने विषयलाई बुझ्नका लागि यस उप-जातिको इतिहासको अध्ययन हुनुपर्छ । वर्तमान परिपेक्ष्यको विश्लेषण गर्दा ऐतिहासिक पक्षलाई नकार्न सक्ने अवस्था हुँदैन । इतिहासले नै वर्तमानलाई आकार दिने हो । ऐतिहासिक तथ्यमा प्रवेश नगरी वर्तमानको उचित मूल्यांकन हुन सक्दैन ।

**(ख)** धन बहादुर कुँवरको नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विषयमा विद्यावारिधि (पीएच्.डी.) उपाधिका निमित्त मानविकी तथा सामाजिकशास्त्र सङ्कायमा प्रस्तुत ***"काठमाडौं उपत्यकाका कुसले जातिको सामाजिक तथा धार्मिक जीवन र परिवर्तनका स्वरूपहरू"*** शीर्षकको शोध प्रबन्धमा लिच्छवीकालीन समय देखि जुगि उप-जातिको बसाइँ **सत्तल अतिरिक्तको घर**मा रहेको तथ्य पेश गरिएको छ ।

**(ग)** लक्ष्मी प्रसाद कपाली, राजु कपाली तथा सुनिल कपालीले लेखेको ***"कपाली : संक्षिप्त परिचय"*** मा पनि विभिन्न अभिलेखहरूको अध्ययन गरी **कपाली**हरूको बसोबास **सतःछें**मा रहेको देखाइएको छ ।

**(घ)** Ulrike Müller-Böker ले सन् १९८८ मा जातको आधारमा बसाइँ क्षेत्र निर्धारण सम्बन्धी अनुसन्धान गरी **Spatial Organization of a Caste Society: The Example of the Newar in the Kathmandu Valley, Nepal** नामक ग्रन्थ प्रकाशन गरेका थिए । उनले उपत्यकाका ४३ वटा नेवाः बस्तीमा अनुसन्धान गरेका थिए । उक्त अनुसन्धानमा उनले ***"The impure Jvagi, however, all live inside the settlement; often they live in saltats close to the temples they help to maintain. These sattals are multi-storey buildings, donated to provide accommodation for pilgrims and ascetics and they may also house a god."*** (पाना ३०) भनि उल्लेख गरेका छन् ।

**(ङ)** Todd T. Lewis को ***Buddhist Merchants in Kathmandu the Asan Twah Market and Uray Social Organization*** मा उनले असं (असन) मा उराय् जाति बारे अनुसन्धान गरेका छन् । त्यसमा उराय् जातिको अरू जातिसँग सम्बन्धको चर्चा गर्दा कपालीहरू ७ (सात) जना तथा ०.७% मा रहेको भन्ने उल्लेख गरेका छन् । यसमा उनले ***"This caste group of Newari-speaking musicians claim to be settled by Gorakhanathi yoginis honored by the Malla kings who gave them the control over major public rest-houses and legal rights to receive certain offerings"*** (पाना ६६) भनि उल्लेख गरेका छन् ।

**(च)** जुगि उप-जातिका मानिसहरू पहिले गृहस्थ जीवन निर्वाह गर्दैनथे । उनीहरू कापालिक रूप धारण गरी ठाउँठाउँ जाने गर्थे । यसरी पनि यिनीहरूको बसोबास **सतःछें (सत्तलघर)** मा रहन गएको हो । कुनै समयमा स्थायी बसोबासको आवश्यकता नभएको जीवनशैली भएको हुनाले यस्ता संरचनाहरूमा बसोबास गर्दै आएका पछी गृहस्थ जीवनमा परिणत भएपछी यही संरचना स्थायी बसोबासको संरचना बन्न पुगेको हो ।

**(छ)** त्यसै गरी अरू जात सरह घर बनाउँदा घरको छाना जोडिने अवस्था हुँदा कथित "अछूत" जातकाहरूसँग छाना नजोडियोस् भन्ने हेतुले पनि **सतः (सत्तल)** निर्माण गरी त्यस्तै संरचनामा बसोबास गर्नुपर्ने भन्ने पनि बुझाई छ । यसरी अरू सरह घर बनाएर बस्न पाएमा अरू सरहकै "समान हैसियत" देखिने हुँदा यिनीहरूको "असमान हैसियत"

ले दृश्यता पाओस् भनि अरू सरहको घर बनाउन नपाई **सतःछेँ (सत्तलघर)** मा बस्नुपरेको भन्ने पनि बुझाई छ ।

**(ज)** प्रचलित किंवदन्तीहरू बुझ्दै जाँदा यस्तो प्रकृतिको किंवदन्ती पनि सुन्न पाइयो । [स्रोत : सुनिल कपाली, जनबहाःल, येँ (काठमाडौँ)]

न्हापा न्हापा गुभाजुत, जुगित व प्वःत धाइपिं दाजुकिजापिं हं। अले छन्हु थुपिं दथुइ ज्या इनेगु धकाः खँ जुल हं। क्वतः, प्वतः व सतः। दकस तःधीक चलाख हं। व चलाख जुवलय् का ज्याः छु यःगु धाल धाःसा जिं क्वतः यःगु धाल। व क्वतः यःम्ह गुभाजु जुल। अनं ल्याः दकस चीधीक यक्व छुं मसिउम्ह वं जि प्वतः यःगु धकाः धाल। व किजा प्वः जुल। अनं दथुइ च्वंम्हसितः सतः लात। व जुगि जुल हं।

यो किंवदन्तीलाई यसरी अनुवाद गर्न सकिन्छ :-

*पहिले पहिले गुभाजु (बज्राचार्य), जुगि र प्वः (पोडे) दाजुभाइ थिए रे । अनि एकदिन उनीहरू बीच कामको बाँडफाँड गर्ने भन्ने कुरा चल्यो रे । क्वतः (नेवाः समुदायमा पुजाका सामाग्रीहरू राख्ने एउटा गोलाकारको गहिरो भाँडो), प्वतः (माछा मार्नका लागि प्रयोग हुने एउटा माटोको भाँडो) र सतः (सत्तल) । सबैभन्दा ठूलो चलाख रे । ऊ चलाख भएपछी ल अब के लग्ने भन्यो भन्दा म क्वतः लान्छु भन्यो । त्यो क्वतः लग्ने गुभाजु भयो । त्यसपछी सबैभन्दा सानो धेरै केही नजान्ने उसले म प्वतः लान्छु भनेर भन्यो । त्यो भाइ प्वः भयो । त्यसपछी बीचकोलाई चाही सतः पर्यो । ऊ जुगि भयो रे ।*

**(झ)** त्यसै गरी अर्को एउटा किंवदन्ती यस्तो पनि रहेको छ । [स्रोत : किलागः, येँ (काठमाडौँ)]

न्हापा न्हापा सीथ्यय् दसय् तब्वकं ब्वय् पूनाः ब्वल हं। यक्व मनूत मरुयाः ग्वब्वय् पिदन हं। अले उवलय्या जुजुपिंसं ज्याः छु याय माली ल धकाः विचाः याःवलय् थन जुगित धाइपिं द, इपिं तन्त्र विद्या नं सःपिं अले इमि वाउं पुयाः ब्वय् लङ्कइपिं धकाः सहलह जुल हं। अले सीतः वाइगु गुजनातं सःताः हःगु हं। सी पुनखापिं गुजनातय् ब्वंपिं धाइ। जुथ ज्याः सीसं पुइगु माःलि वाजायात गुजनाति वाजा नं धाइ। अले इपिं थन वयाः थःगु तन्त्र विद्याः ब्वय् दसा ल्हुक्क लङ्काः

लिहाँ ब्वने ग्यंवलय् थन व्वंपिं जुजुपिंसं ज्ञुमिगः छिपिं लिहाँ ब्वनमग जिमिसं छिमिगः थन ह थाय् वियाः गय धकाः धाल हं । जूलय् थी पुनखापिं ला आगि, थी धञ्जपिं ला सांसानिक माह ग्याग यानाः जिवन ह्याकाव्वनापिं जुल । जिपिं गथ व्वने धकाः शुन हं । जूलय् थन व्वंपिं जुजुपिंसं का छिपिं जुथ खःसा छिपिं छँ दनाः व्वने म्वाः धकाः क्षगिं क्षगिं ग्वाःग्वालय् सगः दनाः जुन गयगु धकाः क्वःजिग हं ।

यो किंवदन्तीलाई यसरी अनुवाद गर्न सकिन्छ :-

*पहिले पहिले हाम्रो देशमा ठूलो रोग फैलेर आयो रे । धेरैजना बिरामी हुँदै महामारी निस्कियो रे । अनि त्यो बेलाको राजाहरूले अब के गर्नु पर्ला रे भनि बिचार गर्दा यता जुगिहरू भन्ने छ, उनीहरू तन्त्र विद्या पनि जानेको छ उनीहरू बाजा फुकेर रोग बिसो पार्न सक्ने भन्ने सल्लाह भयो रे । अनि हामीलाई चाहीं गुजरातबाट बोलाएर ल्याएको रे । हाम्रो पुर्खाहरू गुजरातको भन्छ । त्यही भएर हामीले फुक्ने बाजालाई गुजराती बाजा पनि भन्छ । अनि उनीहरू यहाँ आएर आफ्नो तन्त्र विद्याले रोग दशा सबै बिसो पारेर फर्केर जान लागेको बेलामा यहाँ बस्ने राजाहरूले उनीहरूलाई तिमीहरू फर्केर नजाउ हामी तिमीहरूलाई यहाँ नै ठाउँ दिएर राख्छु भनेर भन्यो रे । अनि हाम्रो पुर्खाहरू त जोगी, हामी भनेको त सांसारिक मोह त्याग गरी जीवन अगाडी बढाइरहेकोहरू भयो । हामी कसरी बस्ने भनेर सोध्यो रे । अनि यहाँ बस्ने राजाहरू ल तिमीहरू यस्तो हो भने तिमीहरू घर बनाएर बस्नु पर्दैन भनी प्रत्येक प्रत्येक टोलटोलमा सत्तल बनाएर त्यहाँ राख्ने भन्ने निर्धो भयो रे ।*

(ञ) यसरी जुगि उप-जातिका मानिसहरूको **सतःछैं (सत्तलघर)** हरूमा परापूर्वकाल देखि बसोबास रहेको छ भने यस्ता संरचनामा बसोबासको अधिकार हाम्रो सांस्कृतिक अधिकार एवं प्रथाजन्य कानून प्रदत्त अधिकार पनि हो ।

(ट) नेपाल मन्दलमा पाइने विशिष्ट प्रकृतिका संरचनाहरू जस्तै **फलचा (पाटी)**, **सतः (सत्तल)**, **मन्दः (मण्डप)**, **चपाः (चपात)** लगायत अवश्य पनि वास्तुकलात्मक एवं संरचनात्मक आधारले भिन्न एवं विशिष्ट छ । यद्यपि भारतीय उपमहाद्वीपमा **जोगी**हरू

**धर्मशाला** बनाई त्यहाँ बास गर्ने गरेको तथ्य हामी सामू हुँदा तिनै **जोगी**हरूबाट नेपाल मन्दलमा **जुगि समुदाय** बन्दा त्यस्तै **धर्मशाला** प्रकृतिको संरचना हाम्रै पुर्खाहरूले भित्र्याएका हुन् । नेपाल मन्दलमा यसले आफ्नो विशिष्ट स्वरूप भने लिएको हो । त्यसैले जुन संरचना नै हाम्रा पुर्खाहरूले निर्माण थालनी गरे, निर्माण गरे र सदियौं देखि बस्दै आए, आज तिनै संरचनाहरूबाट हामी अधिकारच्यूत हुनुपरेको छ ।

**(ठ)** इतिहास तथा संस्कृति दुबै **कानूनका स्रोत (Sources of Law)** हुन् । तसर्थ ऐतिहासिक, सांस्कृतिक, परम्परागत तथा प्रथाजन्य आधारमा जुगि उप-जाति समुदायको **सतःछें (सत्तलघर)** मा हकको सृजना हुन्छ । जुगि उप-जाति समुदायले **सतःछें (सत्तलघर)** मा पाएको सांस्कृतिक अधिकार नै हाम्रो हकको स्रोत बन्छ ।

९. <u>**नेवाः शहरी संरचना तथा बसाइँको बाँडफाँड :**</u> नेवाः समाज एक जातिय समाज (Caste society) हो । नेवाः बस्तीहरूको बनोट तथा त्यसमा मानिसहरू बसाइँको पद्दती (Settlement pattern) पनि जातको आधारमा वर्गिकृत छ ।

**(क)** नेवाः बस्तीको केन्द्रमा **लायकु (लायकू)** अर्थात् दरबार हुन्छ । लायकू क्षेत्रको वरीपरी पुरोहित्याइँ गर्ने जातिको बसोबास हुन्छ । त्यस घेरा बाहिर व्यापार गर्ने जातिको बसोबास हुन्छ । त्यस घेरा बाहिर सेवामूलक जातिको बसोबास हुन्छ । अन्ततः बस्तीमा प्रवेश गर्ने द्वारहरू **ध्वाखा (ध्वाखा)** हुन्छन् । बस्तीलाई चारैतर्फ पर्खालले घेरिएको हुन्थ्यो । यी पर्खालहरू अहिले अस्तित्वमा छैनन् तर ध्वाखा (प्रवेश द्वार) हरू प्रायः अहिले पनि अस्तित्वमा छन् । उक्त पर्खाल बाहिर कथित अछूत जातिहरूको बसोबास हुन्छ । यी तह-तहको वर्गिकरण भित्र पनि तह-तहको वर्गिकरण हुन्छ ।

**(ख)** Ulrike Müller-Böker ले सन् १९८८ मा जातको आधारमा बसाइँ क्षेत्र निर्धारण सम्बन्धी अनुसन्धान गरी **Spatial Organization of a Caste Society: The Example of the Newar in the Kathmandu Valley, Nepal** नामक ग्रन्थ प्रकाशन गर्दा नेवाः शहरी संरचनामा जातका आधारमा हुने बसोबासको वर्गिकरण बारे केन्द्रित रही

अनुसन्धान गरेको पाइन्छ । यसबाट पनि नेवाः बस्तीहरूमा जातको आधारमा बसाइँको निर्धारण हुने पुष्टी हुन्छ ।

**(ग)** Niels Gutschow तथा Bernhard Kolver द्वारा लिखित **Bhaktapur : Ordered Space Concepts and Functions in A Town of Nepal** मा भक्तपुरको स्थान उपयोग तथा अवधारणा बारे चर्चा गरिएको छ । उक्त पुस्तकमा पनि जातका आधारमा मानिसहरूको बसाइँ शहरको कुन भेगमा हुने भन्ने निर्धारण गरेको भन्ने अनुसन्धान गरेको पाइन्छ । यसबाट पनि नेवाः बस्तीहरूमा जातको आधारमा बसाइँको निर्धारण हुने पुष्टी हुन्छ ।

**(घ)** Anil M Shakya ले आफ्नो **Newar, Marriage and Kinship in Kathmandu, Nepal** नामक विद्यावारीधि शोध प्रबन्धमा जातको आधारमा बसाइँ रहनेमा थप प्रकाश पारिएको छ ।

दस्तावेजमा उल्लेख छ, ***"Caste plays an important role not only in the cultural***

Table 2.3: Main localities (*twāḥ*) and the principal castes found in southern Kathmandu according to one knowledgeable informant.

| Localities (*twāḥ*) | Principal castes |
|---|---|
| Jhochẽ | Śreṣṭha, Vajrācārya, Mānandhar |
| Om bāhā | Vajrācārya, Śākya, Tāmrākār |
| Nabahī | Vajrācārya, Śreṣṭha |
| Yaṅgā (Yaṅgāl) | Maharjan and others. |
| Manjeshwari | Ranjitkār |
| Iku bāhā | Śreṣṭha, Vajrācārya |
| Jyā bāhā | Śreṣṭha, Ranjitkār, Citrakār |
| Lagā (Lagan) | Śākya, Tulādhar |
| Nāy Pācho | Maharjan, Shāhi, Śākya |
| Podetwāḥ | Dyaḥlā |
| Brahma | Maharjan, Vajrācārya |
| Gophal | Maharjan, Shāhi |
| Wande | Prajāpati |
| Dalāchẽ | Maharjan, Kāranjit |
| Khālchẽ | Śākya |
| Hyumat | Mixed |
| Kohiti | Maharjan, Śākya, Citrakār, Cyāmkhalaḥ |
| Nhūghaḥ (Jaisideval) | Śreṣṭha, Citrakār and others. |
| Majipāt | Ranjitkār, Śreṣṭha |
| Chikāmuga | Ranjitkār, Śreṣṭha |
| Bhindyaḥ (Bhimsensthān) | Citrakār, Sthāpit and others. |
| Maru | Tāmrākār, Śākya, Jośī and others. |

***but also geographical aspects of Newar society. I once asked a Buddhist high-caste man, aged 70, to guide me on a tour of the historical sites of the old Kathmandu. Apart from telling me the legends and myths of each significant place, he also clearly identified each twäh or locality according to main caste groups who dominate each twäh (see Table 2.3)"*** [पाना ३९, ४०]

**(ङ)** यद्यपि कथित अछूत वर्गका रूपमा राखिएतापनि जुगि उप-जातिको बसाइँको परिवेश भने फरक छ । हामी जुगि उप-जातिलाई पर्खाल बाहिर बस्नुपर्ने नियम प्रचलन थिति थिएन । बस्ती भित्र नै बसोबास गर्न सकिन्थ्यो । यद्यपि अरू कथित ठूला वा उपल्ला जातका मानिसहरू सरह घर बनाएर बसोबास गर्न पाइँदैनथ्यो । प्रत्येक टोल-टोलमा अवस्थित सतःछेँ (सत्तलघर) मा बसोबास गर्नुपर्ने थिति थियो ।

**(च)** यसरी टोल-टोलको सतःछेँ (सत्तलघर) मा बसोबास भएको हुनाले अन्य जातिहरू सरह हामी जुगि उप-जातिको संख्यात्मक बाहुल्यता हुने कुनै टोल हुने भएन । ज्यापु जातिको टोल हुन्छ, बरे जातिको टोल हुन्छ, प्वः (पोडे) जातिको टोल हुन्छ, सबै जातजातिको आ-आफ्नै टोल हुन्छ । तर हामी जुगि उप-जातिको अरू सरह परम्परागत वा ऐतिहासिक रूपमा एकजातिय / सहजातिय टोल भने हुँदैन । यही कारण हामी टोल-टोलमा अल्पसंख्या अल्पमतमा परेका छौं । यसैले गर्दा हाम्रो भौतिक निकटताबाट सञ्जालहरू निर्माणमा चुनौती देखा पर्छ । राज्यको सबैभन्दा तल्लो तह अर्थात् वडा तहमा समेत हाम्रो बाहुल्यता हुने अवस्था हुँदैन । यति मात्र होइन वडा भित्र गठन हुने टोल समितिहरूमा समेत हाम्रो बाहुल्यता हुने अवस्था हुँदैन । प्रत्येक टोलमा १ देखि २ परिवार वा घर सम्म भएको पाइन्छ ।

**(आ) भाषिक कोण ।**

उपरोक्त खण्ड (अ) मा व्याख्या गरिए अनुसारको विषयवस्तुलाई बुझ्दा यो विषय त जातिय अधिकार, आवासको हक लगायतको विषय हो, यसमा भाषाको सम्बन्ध केकसरी आयो भन्ने प्रश्न उठ्न सक्छ । तर उपरोक्त खण्डलाई भाषाको कोणबाट नियालेर हेर्दा यसका अधिकांश विषयवस्तु भाषा, भाषामा हुने वैचारिकिकरण (conceptualization), भाषा बीचको

असमान कानूनी अवस्था, आदिवासी भाषाबाट भएको अप-अनुवाद (गलत अनुवाद) का विषयहरू निहित छन् ।

भाषाको विषयमा यस आयोग स्वयं विज्ञ आयोग हो । मैले यस आयोगलाई व्याख्या विश्लेषण गरिरहनै पर्दैन । तैपनी त्रिभुवन विश्वविद्यालयको आङ्गिक क्याम्पस त्रि-चन्द्र बहुमुखी क्याम्पसमा ३ वर्षे बि.ए. स्नातकमा भाषाविज्ञान मूल विषय लिई अध्ययन गरेको कलाशास्त्रीको हैसियतले आफूले जानेका केही कुरा यस आयोग समक्ष पेश गर्न चाहेको हुँ । यसमा विज्ञ आयोगले अझै थप व्याख्या विश्लेषण गर्ने नै छ भन्ने आश्वासन छ ।

१०. **भाषा तथा वैचारिकिकरण :** भाषा तथा वैचारिकिकरण (conceptualization) को तादाम्य सम्बन्ध हुन्छ । हामीले बोल्ने भाषाले हाम्रो संसारप्रतिको दृष्टिकोणलाई निर्धारण गर्दछ भन्ने भाषावैज्ञानिक तथ्य छ ।

भाषाविज्ञानमा Linguistic relativity नामक परिकल्पना (Hypothesis) रहेको छ । यसलाई Sapir–Whorf hypothesis पनि भनिन्छ । कुनै पनि भाषाले त्यस भाषाका वक्ताहरूको वास्तविकता प्रतिको सोचाईलाई निर्धारण गर्दछ भन्ने यस परिकल्पनाको मुख्य सार हो ।[५१] अब यसरी भाषाले नितान्त (absolutely) मानिसको सोचाईलाई निर्धारण गर्छ भन्ने विषयको छलफल आफ्नै स्थानमा छ, तर भाषाले मानिसको सोचाईमा पुर्याउने प्रभाव सम्बन्धी अध्ययन भाषाविज्ञानको एक प्रमुख अध्ययन हो ।[५२]

मानव समाजमा भाषा भिन्नै रूपमा अवस्थित हुँदैन । भाषा, संस्कृति, परम्परा, समाज, जातियता, भूगोल, वातावरण, मौसम लगायत यी सबै पक्षहरूको अन्तरसम्बन्ध रहेको हुन्छ । त्यसैले जुन समाज, समुदाय वा भूगोलको विषयवस्तु हो, त्यसलाई त्यही समाज, समुदाय वा भूगोलको भाषाले प्रतिनिधित्व गरेको हुन्छ । भाषा र वैचारिकिरणको अन्तरसम्बन्ध हुन्छ ।

[51] *Evidence for Linguistic Relativity*, Susanne Niemeier, John Benjamins Publishing Company, 2000.
[52] *Language and Thought*, Bernard Comrie, Linguistic Society of America.

भाषाको विषयमा यस आयोग स्वयं विज्ञ आयोग हो । त्यसैले धेरै व्याख्या गरिरहन परेन । यद्यपि केही उदाहरणहरू दिन चाहैं ।

- खस / पर्वते भाषा बोल्दा प्रथम व्यक्ति बहुवचन सर्वनाममा स्रोता समावेश छ वा छैन भन्ने परिकल्पना गरिरहन पर्दैन । "हामी" सर्वनामको प्रयोग हुन्छ । तर नेपाल भाषा वा तामाङ भाषा बोल्दा त्यो "हामी" ले स्रोतालाई समावेश गर्छ कि गर्दैन भन्ने विषयलाई परिकल्पना गरेको हुन्छ । स्रोता समेटिँदा "हामी" नेपाल भाषामा "ञी (झी)" र तामाङ भाषामा "ཧྱང་ (ह्याङ)" हुन्छ । स्रोता नसमेटिँदा "हामी" नेपाल भाषामा "ञिपिं (जिपिं)" र तामाङ भाषामा "ངཱ་ནི་ (ङानी)" हुन्छ ।
- नेपाल भाषाको नजरबाट हेर्दा "व्वँचू (वँचु)" र "व्वामू (वामु)", त्यसै गरी खस / पर्वते भाषाको नजरबाट हेर्दा "नीलो" र "हरियो" दुई थरीका रङ्गहरू हुन् । तामाङ भाषाको नजरले हेर्दा एकै रङ्ग "པིང་གཻ་ (पिङ्गाइ)" हो । कुनै भाषाको लागि यी दुई फरक रङ्गहरू भए, कुनै भाषाको लागि एउटै रङ्ग भए ।
- खस / पर्वते भाषामा "कानूनको हात लामो हुन्छ" भन्नुको अर्थ "कानून सबै तिर फैलिएको छ" भन्ने बुझिन्छ, तर यही अभिव्यक्तिलाई हूबहू नेपाल भाषामा उल्था गर्ने हो भने "कानून चोर हो" भन्ने अर्थ लाग्छ, किनभने "हात लामो हुनु" भनेको "चोरी गर्न सक्नु" भन्ने अर्थ लाग्छ ।
- खस / पर्वते भाषामा कुनै प्रकृतिको वस्त्र वा धातुलाई आफ्नो शरीरमा धारण गर्ने कार्यमा "लगाउने" क्रियापद प्रयोग हुन्छ । लुगा लगाउने, जुत्ता लगाउने, सुरुवाल लगाउने, सर्ट लगाउने, टोपी लगाउने, इत्यादी । खस / पर्वते भाषामा यी सबै एकै प्रकृतिको कार्य हो । तर नेपाल भाषामा कुन वस्तुलाई कसरी धारण गरिन्छ भन्ने आधारमा छुट्टा छुट्टै क्रियापदहरू प्रयोग हुन्छन् । व्वस8 (वसः) अर्थात् लुगा भए पून (पुने) क्रियापद । तपूलि (तपुलि) अर्थात् टोपी भए पूय (पुये) क्रियापद । तिसा (तिसा) अर्थात् गहना भए तिय (तियेे) क्रियापद । गाचा (गाचा) अर्थात् पछ्यौरी भए न्ाय (न्यये) क्रियापद । मा8 (माः) अर्थात् माला भए क्वखाय (क्वखाये) क्रियापद । प्वाकलं (प्वाकलं) अर्थात् भोटो भए फिय (फिये) क्रियापद । लकां (लकां) अर्थात् जुत्ता भए न्ह्याय (न्ह्याये) क्रियापद । यसरी इत्यादी । नेपाल भाषाको नजरमा यी सबै फरक प्रकृतिका कार्य हुन् । यी सबै प्रकृतिका वस्त्र वस्तुलाई शरीरमा धारण गर्ने प्रक्रिया पनि भिन्नाभिन्नै छन् । टाउको माथी

घोप्ट्याएर लगाउने वस्त्रमा छुट्टै प्रकृतिको कार्य भयो । खुट्टा पसाएर माथी तर्फ तान्ने वस्त्रमा छुट्टै प्रकृतिको कार्य भयो । खस / पर्वते भाषामा एउटै प्रकृतिको कार्य नेपाल भाषामा अनेक प्रकृतिको कार्य ।

यसै गरी नेवाः समाज तथा नेवाः इतिहाससँग जोडिएका विषयवस्तुलाई नेपाल भाषामा एक किसिमको वैचारिकिकरण गरिएको हुन्छ । त्यसको ठ्याक्क अनुवाद अन्य भाषामा नहुन सक्छ, र प्रायः हुँदैन पनि । वा नेपाल भाषामै चर्चा गर्दा जुन ढङ्गले सुक्ष्मदर्शी (nuanced) भएर कुराकानी गर्न सकिन्छ, त्यो दृष्टिकोण अन्य भाषामा प्रतिबिम्बित नहुन सक्छ ।

हामीलाई यो विषयवस्तु राज्य समक्ष पेश गर्नका लागि खस / पर्वते भाषा प्रयोग गर्नैपर्ने बाध्यता छ । यही निवेदन लेख्ने क्रममा पनि अधिकांश सांस्कृतिक विषयवस्तुहरू खस / पर्वते भाषामा व्याख्या गर्न चुनौतीपूर्ण रहेको थियो । यसरी अनुवाद गरी व्याख्या गर्दा कतिपय अवस्थामा त्यस विषयको मूलमर्म नै हराउने पनि हुन्छ ।

त्यस्तै वैचारिकिकरणको अनुवादको चपेटमा परेको विषय **पाटीपौवा** भन्ने विषय पनि हो । नेपाल भाषामा **रूलवा (फलचा)**, **सग8 (सतः)**, **मदृ8 (मन्दः)**, **वपा8 (चपाः)** यस्ता फरक फरक प्रकृतिका संरचनाहरू हुन् । तर खस / पर्वते भाषामा अनुवाद गर्दा यी सबै प्रकृतिका संरचनालाई **पाटीपौवा** भन्ने बुझाईमा परिणत गर्न खोजिएको देखियो ।

यस्तै अर्को उदाहरण **वूक / वूक्व (चुक / चुक्व)**, **लाछि (लाछि)**, **ननि (ननि)**, **वहा8 (बहाः)**, **वही (बही)** जस्ता संरचनाहरू पनि हुन् । चारै तर्फ घरले घेरिएको बीचमा खुल्ला क्षेत्र भएको र प्रवेश गर्दा एउटा घर मुनीको बाटो भएको संरचना सबैलाई **चोक** भन्ने बुझाईमा परिणत गर्न खोजिएको देखियो । तर नेपाल भाषामा यी संरचनाहरू भिन्नाभिन्नै प्रकृतिका संरचना हुन् । अहिले उपत्यकामा पनि धेरैवटा बाटो मिसिएको ठाउँलाई पनि **चोक** भन्ने अभ्यास सुरु भएको देख्न पाइन्छ । तर नेपाल भाषामा **प्यकालँ (प्यकालँ)** तथा **द्वपा8 (द्वपाः)** भन्ने फरक फरक अवस्थाका स्थान हुन्छ ।

नेपाल भाषामा पिखालख् (पिखालखु) भन्ने खस / पर्वते भाषामा अनुवाद छैन । त्यसैले बाहिरको नजरले हेर्दा बाटोमा पुजा गरेको जस्तै देखिन्छ ।

छ्वास (छवास) भन्ने शब्द खस / पर्वते भाषामा छैन । त्यो concept नै अस्तित्वमा छैन । त्यसैले छवासमा चढाएको वस्तुलाई बीच बाटोमा फालेको जस्तो देखिन्छ ।

यल अर्थात् पाटनमा पुल्चोक र ग्वार्को भन्ने ठाउँ छ । मानिसहरू हिंडडुल गर्दा माथी सम्म वा तल सम्म जाने भन्छन् । पहाडी क्षेत्र भए माथीसम्म वा तलसम्म हुनु, उपत्यकाको समथलमा माथी तल कसरी निर्धारण हुन्छ भन्ने लाग्न सक्छ । तर यलको पुल्चोक र ग्वार्को दुबै खस / पर्वते भाषामा अनुवादित नाम हुन् । पुल्चोकको वास्तविक नाम पूच्व (पूच्व) हो । नेपाल भाषामा "च्व (च्व)" को अर्थ "माथी, चुचुरो" भन्ने हुन्छ । नामको अन्तिममा "च्व (च्व)" हुनुको अर्थ यो कुनै माथिल्लो भेगको स्थान हो भन्ने बुझ्नुपर्छ । ग्वार्कोको वास्तविक नाम ग्वाराक्व (ग्वाराक्व) हो । नेपाल भाषामा "क्व (क्व)" को अर्थ "तल" भन्ने हुन्छ । नामको अन्तिममा "क्व (क्व)" हुनुको अर्थ यो कुनै तल्लो भेगको स्थान हो भन्ने बुझ्नुपर्छ ।

त्यसैले नेपाल भाषामा प्रसरण हुने संवादलाई खस / पर्वते भाषामा व्यक्त गर्नुपर्ने बाध्यता एवं अनुवाद गर्दा विचार नपुर्याउँदा वास्तविकताको मर्म गुमेको अवस्थालाई मध्यनजरमा लिनुपर्छ ।

११. **<u>सतःछेंको परिचय एवं सतःछें (सत्तल घर) तथा फलचा (पाटीपौवा) बीचको भिन्नता :</u> सतःछें (सत्तल घर)** तथा **फलचा (पाटी)** मा समरूपता देखिन्छ, तर एउटै भने होइनन् ।

**(क)** **फलचा**, वैकल्पिक हिज्जे **फल्चा, (पाटीपौवा)** एकतल्ले मात्र हुन्छ । यो प्रायः बाटो रहेको भुइँ सतह भन्दा केही उकासिएको जगमा एकतल्ले संरचना हुन्छ । यो सार्वजनिक प्रयोग प्रचलनका लागि बनाइएको हुन्छ । बाटो हिंड्ने बटुवाहरूको लागि थकाई मार्न तथा ओत लिनका लागि यो बनाइएको हुन्छ । त्यसै गरी टोलछिमेकका मानिसहरूको सामाजिकिरण हुने थलो पनि हो । कतिपय **फलचा**हरूमा भजन गाउने

लगायत थुप्रै धार्मिक-सांस्कृतिक कार्य हुने गर्दछ । **फलचा**को माथी छाना हुन्छ । प्रायः **फलचा**हरू चारै तर्फबाट खुल्ला हुने गर्दछ । विभिन्न **थां (थाम)** बाट छाना अडाइएको हुन्छ । छेउछाउमा घर भएमा मात्र चारैतर्फ खुल्ला हुँदैन ।

**(ख)** नेपाल भाषाको **सग8छँ (सतःछें)** शब्द दुई शब्दको समिश्रण हो । यो **सग8 (सतः)** तथा **छँ (छें)** शब्दको समिश्रणमा बनेको छ । **सग8 (सतः)** शब्दको अर्थ **सत्तल** हुन्छ भने **छँ (छें)** शब्दको अर्थ **घर** हुन्छ । यसलाई खस/पर्वते भाषा (नेपाली भाषा) मा **सत्तलघर** पनि भन्ने गरिएको पाइन्छ । खस/पर्वते भाषा (नेपाली भाषा) मा **सत्तल** भन्ने शब्द पनि नेपाल भाषाको शब्दबाट अपनाइएको छ । **सग8 (सतः)** शब्दको मूल रूप **सगल (सतल)** हो । यसरी "ल वर्ण" लोप भएर दीर्घ स्वर उच्चारण बन्ने प्रक्रिया यस निवेदनको प्रकरण २ (क) मा व्याख्या गरिसकेको छ ।

**(ग)** **सतःछें**को भुइँतल्ला पनि **फलचा** जस्तै हुन सक्छ । **सतःछें** केवल एकतर्फबाट मात्र खुला हुन्छ । यसको भुइँ तल्ला तीन तिर भित्ताको आडमा हुन्छ । **सतःछें** बहुतल्ले हुन्छ । **सतःछें**को भुइँतल्ला सतःको प्रयोजन **फलचा**को जस्तै हुन सक्छ । यद्यपि त्यसमाथी रहने घरको प्रयोजन नितान्त नीजि हुन्छ ।

**(घ)** एक वास्तुशास्त्री Wolfgang Korn द्वारा लिखित **The Traditional Architecture of the Kathmandu Valley** मा धर्मशाला भन्ने प्रकारका तीन संरचना **फलचा (पाटी)**, **सतः (सत्तल)** तथा **चपाः (चपात)** रहेको व्याख्या गरेका छन् । उक्त पुस्तकमा वास्तुकलात्मक एवं संरचनात्मक रूपमै **फलचा (पाटी)** तथा **सतः (सत्तल)** बीच भिन्नता रहेको दर्शाइएको छ । *(पाना १२७ देखि पाना १४६) ।*

सोही पुस्तकबाट साभार यी दुई तस्वीर जसले फलचा तथा सतःछें बीच भिन्नता छुट्याउने कार्यलाई दृष्टिगत गराउँछ ।

फलचाको तस्वीर (पाना १२९ बाट साभार) ।




8.4 *Pati* of Kuti Saugal Tol, Patan

सतःछेंको तस्वीर (पाना १३१ बाट साभार) ।




8.5 Sundhara Sattal

**(ङ)** सतःछें (सत्तल घर) तथा फलचा (पाटीपौवा) बीचको भिन्नतालाई तालिकामा दृष्टिगत गराइएको छ ।

| फलचा | सतःछें |
|---|---|
| १. यो एक तल्ले मात्र हुन्छ । | १. यो बहुतल्ले हुन्छ । |
| २. यो प्रायः चारैतर्फबाट खुल्ला हुन्छ । | २. यसको भुँइ तल्ला केवल एक तर्फबाट मात्र खुल्ला |

| | |
|---|---|
| | हुन्छ । |
| ३. यसमा विशेषतः काठको थां (थाम) बाट अडाई माथी छाना राखिएको हुन्छ । | ३. यसमा तीन तर्फ भित्ताले अडाई माथिल्ला तल्लाहरूमा आवास बनेको हुन्छ । |
| ४. यसमा मानिस बस्न मिल्ने घर हुँदैन । | ४. यसमा मानिस बस्न मिल्ने घर हुन्छ । |
| ५. सार्वजनिक प्रयोजनका लागि बनाइएको । | ५. जुगि जातका मानिसहरूको आवासका लागि बनाइएको । |

१२. <u>राज्यको त्रुटी :</u> नेपाल भाषामा **रूलवा (फलचा)**, **सग8 (सतः)**, **मन्8 (मन्दः)**, **वया8 (चपाः)** यस्ता फरक फरक प्रकृतिका संरचनाहरू हुन् । तर खस / पर्वते भाषामा अनुवाद गर्दा यी सबै प्रकृतिका संरचनालाई **पाटीपौवा** भन्ने रूपले बुझाइयो । कानूनले "पाटी"लाई सार्वजनिक सम्पत्ति मानेको छ । यसरी फलतः जुगि उप-जातिको घर आवास सार्वजनिक सम्पत्तिमा परिणत हुन गयो ।

नेपालमा घरजग्गा सम्बन्धी गोश्वारा प्रकृतिको कानून मात्र छ । तर नेपालका विभिन्न भूगोल, भूक्षेत्र, स्थान, समुदाय, जाति तथा संस्कृतिमा स्थापित विभिन्न प्रकृतिका जग्गा भूमी सम्बन्धीका अवधारणाहरूलाई कानूनले सही रूपमा सम्बोधन गर्न सकेको छैन । ऐतिहासिक नेवाः बस्तीको बनोट, आकार लगायतका संरचनाहरू पृथक छ । यहाँ पाइने संरचनाहरूको अवधारणा नेपाल भाषामा हुन्छ । राज्यले प्रयोग गर्ने भाषामा यिनलाई सही ढङ्गले अनुवाद गर्न सकेको छैन ।

ऐतिहासिक नेवाः बस्तीहरूलाई प्रभाव पार्ने गरी बनेका कानूनी व्यवस्थाले नेवाः समाज तथा नेपाल भाषामा भएका अवधारणा तथा वैचारिकीकरणलाई इन्कार गर्नु भाषिक हिंसा हो । साथै भाषाको आधारमा विभेद पनि हो ।

नेपाल भाषामा **रूलवा (फलचा), सगः (सतः), मन्दः (मन्दः), वपाः (चपाः)** यस्ता फरक फरक प्रकृतिका संरचना हुँदाहुँदै खस / पर्वते भाषा (नेपाली भाषा) मा बनेका कानून तथा सरकारी नीतिले आदिवासी अवधारणलाई गलहती लगाई गोश्वारा रूपमा पाटीपौवाको नामाङ्कन दिनु भाषिक हिंसा तथा भाषिक विभेद हो ।

१३. **<u>भाषाको अवरोध :</u>** नेपाल एक बहुभाषिक देश हो । हामी नेवाः जातिको मातृभाषा **नेपाल भाषा** हो । तर अहिलेसम्म पनि नेपालमा **खस / पर्वते भाषा (नेपाली भाषा)** को वर्चश्वशाली अवस्था छ । सरकारी कामकाजमा खस / पर्वते भाषा बाहेक अन्य राष्ट्रभाषाहरूको प्रयोग प्रचलन भएको अवस्था छैन । ने.सं. ११३५ (२०७२) सालमा जारी भएको संविधानले बल्ल सरकारी कामकाजमा खस / पर्वते भाषा बाहेक अन्य राष्ट्रभाषाहरूको पनि सरकारी कामकाजमा प्रयोग गर्न सक्ने अवस्था ल्याएको हो । अन्यथा बहुभाषिक देशको वास्तविकता विरुद्ध एकलभाषी राज्य सञ्चालनको बाध्यता थियो । तैपनि आजको मितिमा सम्म पनि कुनै पनि प्रदेश वा स्थानीय तहले नेपाल भाषालाई खस / पर्वते भाषा सरहको वा बराबरको स्थान दिई सरकारी कामकाजमा प्रयोग प्रचलनमा ल्याएको छैन । बागमती प्रदेशले ने.सं. ११४४ (२०८०) सालमा बल्ल प्रदेश सरकारी कामकाजको भाषा सम्बन्धमा ऐन जारी गरेको छ । जारी भएको मितिले १८०औं दिनमा लागू हुने भएकाले हालसम्म लागू भएको अवस्था छैन । अरू प्रदेशले त यस्तो व्यवस्था समेत गरेको छैन । संघीय तह अझै एकलभाषी नै छ । यसरी राज्यबाट बहुभाषाले उपेक्षा पाएको अवस्थामा राज्यको भाषा भन्दा फरक भाषा बोल्ने समुदायहरूलाई राज्यमा पहुँच राख्न भाषिक अवरोध छ ।

नेवाः समुदायमा नेपाली भाषालाई मुख्यतः दुईवटा नामले चिन्ने गरिएको छ । एउटा **खय् ताय् (खय् भाय्)** जसको अर्थ **खस भाषा** हो । यो नाम विशेषतः काठमाडौं-ललितपुरमा प्रचलित छ । त्यसै गरी **यन्ग्या ताय् (पर्त्या भाय्)** पनि भन्ने गरिन्छ जसको अर्थ पर्वते भाषा हो । यो नाम विशेषतः भक्तपुरमा प्रचलित छ । नेवाः जातिले खस / पर्वते भाषा कहिलेदेखि सिक्न थाले वा सिक्नुपर्यो भन्ने यकीन भन्न सकिंदैन, तर आज पनि हाम्रा नेवाः ज्येष्ठ नागरिकहरू खस / पर्वते भाषा नबुझ्ने उल्लेख्य संख्यामा छन् । उपल्लो जात भनाउँदा नेवाःहरूमा त यो अवरोधको अवस्था छ भने हामी कथित तल्लो भनिएका

नेवाःहरूमा यो समस्या झनै व्यापक छ । त्यसै गरी खस / पर्वते भाषा बुझ्नु मात्र पर्याप्त छैन, फर्काउन जान्नुपर्छ । फर्काउन जान्नु मात्र पर्याप्त छैन, त्यसमा लेखपढ गर्न एवं बौद्धिक बहस समेत चलाउन सक्न जान्नुपर्ने बाध्यात्मक अवस्था रहेकाले भाषाको अवरोध पनि यो समस्या उजागर सम्बोधन हुन नसक्नुको प्रमुख कारण हो । नापी आउँदाको समयका बारेमा नेवाः ज्येष्ठ नागरिकहरूको अनुभव मात्र बटुल्ने हो भने भाषाका कारण सृजना भएका अवरोध एवं त्यसले हामी नेवाः माझ भोग्नुपरेका समस्याहरू बारे राज्यले अनुसन्धान गरी दस्तावेजिकरण गर्ने चासो देखाएको नै छैन । राणाकालमा नेपाल भाषा एवं विभिन्न राष्ट्रभाषा (खस/पर्वते भाषा बाहेकका भाषा) लाई भएको दमन एवं राज्यले लिएको पञ्चायतकालीन एक भाषा नीतिको कारणले हामी भाषिक सिमान्तिकरणमा परेको अवस्थालाई सबै प्रकारका ऐतिहासिक विभेद र उत्पीडनको अन्त्य गर्ने संकल्प लिएको वर्तमान संविधानको रोहमा नकार्न सकिँदैन । खस / पर्वते भाषा नजन्नु हाम्रो समुदायको कमजोरी होइन, नेपाल भाषालाई मान्यता दिन नसक्नु राज्यको कमजोरी हो । त्यसैले नापीका बेलामा नेवाः समाजले भोग्नुपरेको भाषाको अवरोधलाई गम्भीरतापूर्वक लिनुपर्छ ।

**(इ) मागदाबी ।**

१४. **आयोगको क्षेत्राधिकार :** नेपालको संविधान धारा २८७ (६) ले भाषा आयोगलाई (ख) भाषाहरूको संरक्षण, संवर्धन र विकासका लागि अवलम्बन गर्नुपर्ने उपायहरूको नेपाल सरकार समक्ष सिफारिस गर्ने; एवं (घ) भाषाहरूको अध्ययन, अनुसन्धान र अनुगमन गर्ने अधिकार दिलाएको छ । भाषा आयोग ऐन, २०७४ को दफा ३ ले आयोगको काम, कर्तव्य र अधिकार तोकेको छ जसानुसार आयोगले भाषा सम्बन्धीका विभिन्न विषयवस्तुमा आयोगले नेपाल सरकारलाई सिफारिस गर्न सक्छ ।

१५. **निवेदनको मागदाबि :** यस निवेदनमा उठान गरिएको विषयवस्तुमा भाषिक कोणले हाम्रा देहाय मागदाबी छन् ।

**(क)** **रूलवा** (फलचा) तथा **सग८छँ** (सतःछेँ) नेपाल भाषामा दुई भिन्न अर्थ दिने भिन्न शब्द हुनका साथै दुई भिन्न प्रकृतिको संरचनालाई बुझाउने भएकाले नेपालको कानूनी

व्यवस्थामा पनि त्यही भाषिकताको सही प्रतिबिम्ब हुने गरी अप-अनुवाद नगरी उक्त भिन्नता खुटिने गरी कानूनी परिभाषामा सम्मेलित गर्न नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

**(ख)** **रूलवा** (फलचा), **सग8** (सतः), **मनृ8** (मन्दः), **वया8** (चपाः) यस्ता नेपाल भाषामा फरक फरक प्रकृतिका संरचना भएकाले यसलाई खस / पर्वते भाषा (नेपाली भाषा) मा अनुवाद गर्दा यी भिन्नताहरू मेटिने गरी "पाटीपौवा" भनि गोश्वारा रूपमा सम्बोधन नगर्न नगराउन एवं यी भिन्नताहरूलाई नेवाः समाजमा जसरी बुझिआएको छ त्यसैलाई नै कानूनी मान्यता दिन दिलाउन समुचित व्यवस्था मिलाउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

**(ग)** नापीको समयमा नेवाः समुदायले भोग्नुपरेको भाषिक अवरोध एवं त्यसकारण निम्तिएका प्रभावहरू बारे आवश्यक अध्ययन अनुसन्धान गरी अभिलेखिकरण गरी तिनीहरूको सम्बोधन गर्न आवश्यक उचित कार्य गर्न गराउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

**(घ)** नेपालमा घरजग्गा सम्बन्धी गोश्वारा प्रकृतिको मात्र कानूनी व्यवस्था भएकाले ऐतिहासिक नेवाः बस्तीहरूको पृथक संरचना तथा सामाजिकताको सही सम्बोधन हुने गरी नेवाः समाजमा प्रचलित अवधारणाहरूलाई नेपाल भाषामा जसरी बुझिआएको छ, त्यसरी नै कानूनमा प्रतिबिम्बित हुने गरी, अपव्याख्या तथा अप-अनुवाद नहुने गरी समुचित व्यवस्था मिलाउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

**(ङ)** नेवाः जाति तथा समुदायलाई प्रभाव पार्ने गरी बनाइएका कानून तथा सरकारी नीति साथै विशेष गरी नेवाः जातिको ऐतिहासिक तथा सांस्कृतिक महत्वका विषयवस्तुमा हुने कानूनी तथा नीतिगत व्यवस्थाहरूमा द्विभाषिक प्रणाली पद्दती अवलम्बन गरी खस / पर्वते भाषा (नेपाली भाषा) सरह नेपाल भाषाको पनि प्रयोग प्रचलन गर्न समुचित व्यवस्था मिलाउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

(च) नेवाः जातिको ऐतिहासिक तथा सांस्कृतिक महत्वका विषयवस्तुका बारे कानूनी तथा नीतिगत दस्तावेजहरूमा लिपिबद्ध गर्ने क्रममा नेपाल भाषाका शब्दहरूलाई खस/पर्वते भाषामा अनावश्यक अनुवाद नगर्न नगराउन, अनुवाद गर्नैपरेपनि नेपाल भाषामा रहेभएको मूल मर्म नै मर्ने गरी वा सो भन्दा फरक पर्ने गरी नगर्न नगराउन, त्यस्ता अनुवाद साथै/सँगै नेपाल भाषाको शब्द पनि उल्लेख समावेश गर्न गराउन एवं नेपाल भाषाको प्रयोगलाई अनिवार्य रूपमा समेट्न भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

(छ) आदिवासी/जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन, २०५८ लगायतका कानूनी व्यवस्थामा प्रयुक्त "नेवार" शब्दलाई "नेवाः" शब्दबाट प्रतिस्थापन गरी नेवाः जातिको आफ्नो पहिचानको अधिकारलाई समेत सुनिश्चित गर्न गराउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

(ज) नेपाः (नेपाल) उपत्यकालाई पछिल्लो समयमा "काठमाडौं उपत्यका" भनि सम्बोधन गर्ने अभ्यास स्थापित हुँदा यहाँको ऐतिहासिक महत्वको नाम लोपप्रायः हुँदै गरेको अवस्था हुँदा "काठमाडौं उपत्यका" शब्दको प्रयोगलाई निरन्तरता नदिन नदिलाउन एवं साविक सरह "नेपाः (नेपाल) उपत्यका" शब्दलाई प्रयोग प्रचलनमा ल्याउन आवश्यक व्यवस्था निर्णय गर्न गराउन भनि नेपाल सरकारलाई सिफारिस गरिपाऊँ ।

१६. **ग्रन्थपुस्तकहरू ।**


(क) *An Account of the Kingdom of Nepal*, 1819, Francis Buchanan Hamilton.

(ख) *Buddhist Merchants in Kathmandu the Asan Twah Market and Uray Social Organization*, Todd T. Lewis.

(ग) *Ethnicity Without Nationalism : The Newars of Nepal*, Declan Quigley.

(घ) Greenwold Structure and Change of a Newari Festival Organization, Hiroshi Ishii.

(ङ) *Hierarchy and Complementarity in Newar Caste, Marriage and Labour Relations*, Michael Allen.

(च) *lntercaste Relations in a Newar Community*, Gérard Toffin.

(छ) *Newar, Marriage and Kinship in Kathmandu, Nepal*, Anil M Shakya.

(ज) *Spatial Organization of a Caste Society: The Example of the Newar in the Kathmandu Valley, Nepal*, Ulrike Müller-Böker.

(झ) *The Newars of Nepal*, Gopal Singh Nepali, 1959.

(ञ) *The Politics of Divinity in the Kathmandu Valley: The Festival of Bungadya Rato Matsyendranath*, Bruce Owens.

(ट) *The Role of the Priest in Newar Society*, Stephen Michael.

(ठ) *The Traditional Architecture of the Kathmandu Valley*, Wolfgang Korn.

(ड) *कपाली : संक्षिप्त परिचय*, लक्ष्मी प्रसाद कपाली, राजु कपाली तथा सुनिल कपाली ।

(ढ) *काठमाडौं उपत्यकाका कुसले जातिको सामाजिक तथा धार्मिक जीवन र परिवर्तनका स्वरूपहरू*, धन बहादुर कुँवर ।

(ण) *जयस्थिति मल्लको सुधार*, चन्द्रविक्रम बुढाथोकी, साझा प्रकाशन, वि.सं. २०३९ ।

(त) *नेपालमण्डल*, काशीनाथ तमोट, नेपालमण्डल अनुसन्धान गुथि, ने.सं. ११२६ ।

**निवेदक,**

रुक्शना कपाली

ठेगाना : सिमाक्वय्, पतक्व टोल, पतक्व, ललितपुर महानगरपालिका वडा नं १६, ललितपुर जिल्ला, बागमती प्रदेश ।

ईमेल : rukshanakapali1142@gmail.com ।

सम्पर्क : ९८०८२६२६९९ ।